बहुप्रकारमत्यर्थं पश्चात्तापातुरो हरिः ।

ताः समाश्वसयामास स्वयमस्राविलेक्षणः ॥८॥

उग्रसेनं ततो बन्धान्मुमोच मधुसूदनः ।

अभ्यषिञ्चत् तथैवैनं निजराज्ये हतात्मजम् ॥९॥

कृतौर्ध्वदैहिकं चैनं सिंहासनगतं हरिः ।

उवाचाज्ञापय विभो! यत् कार्यमविशङ्कितः ॥१०॥

ययातिशापाद् वंशोऽयमराज्यार्होऽपि साम्प्रतम् ।

मयि भृत्ये स्थिते देवानाज्ञापयतु किं नृपैः ॥११॥

पराशर उवाच

इत्युक्त्वा सोऽस्मरद् वायुमाजगम स तत्क्षणात् ।

उवाच चैनं भगवान् केशवः कार्यमानुष ॥१२॥

गच्छेन्द्रं ब्रूहि वायो! त्वमलं गर्वेण वासव ।

दीयतामुग्रसेनाय सुधर्मा भवता सभा ॥१३॥

कृष्णो ब्रवीति राजर्हमेतद्रत्नमनुत्तमम् ।

सुधर्माख्या सभा युक्तमस्यां यदुभिरासितुम् ॥१४॥

पराशर उवाच

इत्युक्तः पवनो गत्वा सर्वमाह शचीपतिम् ।

ददौ सोऽपि सुधर्माख्यां सभां वायोः पुरन्दरः ॥१५॥

वायुना चाहृतां दिव्यां सभां ते यदुपुङ्गवाः ।

बुभुजुः सर्वरत्नाढ्यां गोविन्दभुजसंश्रयात् ॥१६॥

अत्यन्त पश्चाताप गर्दै व्याकुल भएर स्वयंले पनि आँखाहरूमा आँसु भरेर अर्थात् अश्रुपूर्ण आँखा पार्दै उनीहरूलाई अनेकौं किसिमबाट सान्त्वना दिनुभयो अर्थात् उनीहरूलाई सम्झाउनुभयो ॥८॥ परमात्मा श्रीकृष्णबाट राज्याभिषेक सम्पन्न भइसकेपछि यदुश्रेष्ठ उग्रसेनले आफ्नु पुत्र कंस एवं अन्य जति मनुष्यहरू त्यहाँ मारिएका थिए, तिनीहरू सबैको अन्तिम संस्कार सम्पन्न गरे ॥९॥ अन्तिम संस्कार सम्पन्न भइसकेपछि राजसिंहासनमा विराजमान भउका राजा उग्रसेनसँग परमात्मा श्रीहरिले भन्नुभयो- हे विभो! मैले गर्नसक्ने किसिमको जुन सेवा छ, त्यो निःशङ्कोचतापूर्वक मलाई बताइदिनुहोस् अर्थात् आज्ञा दिनुहोस् ॥१०॥ ययातिले श्राप दिएका कारणले गर्दा यद्यपि (हुन त) हाम्रो वंश राज्यको उत्तराधिकारी हुन सक्दैन तथापि म सेवक उपस्थित रहँदा राजाहरूको त कुरै नगरौं, हजुरले देवताहरूलाई पनि आज्ञा दिन सक्नुहुन्छ अर्थात् हजुरमा राजाहरूलाई मात्र नभएर देवताहरूलाई पनि आज्ञा दिने सामर्थ्य रहेको छ ॥११॥ **पराशरजीले भन्नुभयो**- त्यसपछि जगत्को कार्यसिद्धिका लागि अर्थात् संसारमा धर्मको स्थापना गराउनका लागि मनुष्य शरीर धारण गर्नुभएका परमात्मा श्रीकृष्णले वायुको स्मरण गर्नुभयो र वायु त्यसै समयमा त्यहाँ उपस्थित भए अर्थात् आए ॥१२॥ त्यसपछि परमात्मा श्रीकृष्णले वायुसँग भन्नुभयो- हे वायु! तिमीले इन्द्रका नजिकमा गएर भन कि हे इन्द्र! तिमीले घमण्ड गरिरहनुपर्ने कुनै आवश्यकता छैन, तिमीले आफ्नो सुधर्मा नाम भएको सभारूपी रत्न राजा उग्रसेनलाई देऊ अर्थात् प्रदान गर ॥१३॥ परमात्मा श्रीकृष्णको आज्ञानुसार यो सुधर्मा सभा नाम भएको अत्यन्त सर्वोत्तम रत्न राजाहरूका लागि योग्य छ, यसैले यसमा यादवहरू विराजमान हुन अत्यन्त उचित हुन्छ ॥१४॥ **पराशरजीले भन्नुभयो**- परमात्मा श्रीकृष्णले यस प्रकारको आज्ञा दिनुभएपछि वायुले इन्द्रका नजिकमा गएर यी सबै कुरा बताइदिए र इन्द्रले पनि तत्कालै आफ्नो सुधर्मा नाम भएको सभा वायुलाई दिए ॥१५॥ यसप्रकार वायुद्वारा ल्याइएको त्यो सर्वरत्नसम्पन्न दिव्य सभाको उपभोग सबै यादवहरूले यदुवंशका सर्वोत्कृष्ट परमात्मा श्रीकृष्णको हातमा आश्रित रहेर गर्न थाले ॥१६॥ त्यसपछि सम्पूर्ण ज्ञान-

विदिताखिलविज्ञानौ सर्वज्ञानमयावपि ।

शिष्याचार्यक्रमं वीरौ ख्यापयन्तौ यदूत्तमौ ॥१७॥

ततः सान्दीपनिं काश्यमवन्तीपुरवासिनम् ।

विद्यार्थं जग्मतुर्वीरौ बलदेवजनार्दनौ ॥१८॥

तस्य शिष्यत्वमभ्येत्य गुरुवृत्तपरौ हि तौ ।

दर्शयाञ्चक्रतुर्वीरावाचारमखिले जने ॥१९॥

सरहस्यं धनुर्वेदं ससंग्रहमधीयताम् ।

अहोरात्रचतुष्षठ्या तदद्भुतमभूद् द्विज ॥२०॥

सान्दीपनिरसम्भ्याव्यं तयोः कर्मातिमानुषम् ।

विचिन्त्य तौ दा मेने प्राप्तौ चन्द्रदिवाकरौ ॥२१॥

अस्त्रग्राममशेषञ्च प्रोक्तमात्रवाप्य तौ ।

ऊचतुर्व्रियतां या ते दातव्या गुरुदक्षिणा ॥२२॥

सोऽप्यतीन्द्रियमालोक्य तयोः कर्म महामतिः ।

अयाचत मृतं पुत्रं प्रभासे लवणार्णवे ॥२३॥

गृहीतास्त्रौ ततस्तौ तु सार्ध्यपात्रो महोदधिः ।

उवाच न मया पुत्रो हतः सान्दीपनेरिति ॥२४॥

दैत्यः पञ्चजनो नाम शङ्खरूपः स बालकम् ।

जग्राह सोऽस्ति सलिले ममैवासुरसूदन ॥२५॥

विज्ञानमा पारङ्गत अर्थात् पूर्ण रूपमा सिपालु र सर्वज्ञानस्म्पन्न भए तापनि वीरपुरुष श्रीकृष्ण र बलराम दुवै गुरुशिष्यको सम्बन्ध स्थापित गर्न र यो परम्परालाई सुरक्षित राख्नका लागि काशीमा उत्पन्न भएका तथा अवन्तिपुरीमा निवास गरिरहनुभएका सान्दीपनी मुनिका सामीप्यमा अर्थात् आश्रममा जानुभयो ॥१७–१८॥ अत्यन्त पराक्रमी बलराम र परमात्मा श्रीकृष्णले अवन्तिपुरीमा गएर सान्दीपनी मुनिको शिष्यत्व स्वीकार गर्नुभयो अर्थात् उनको शिष्य (चेलो) बन्नुभयो र गुरुप्रति अत्यन्त आदरणीय व्यवहार गरेर सम्पूर्ण जगत्का मनुष्यहरूलाई आचरणको शिक्षा दिन थाल्नुभयो ॥१९॥ हे ब्राह्मणश्रेष्ठ! यो अत्यन्त आश्चर्यमय कुरा भयो, जसमा उहाँहरू दुवैले मात्र चौसठी दिनमा रहस्य अर्थात् अस्त्रमन्त्रोपनिषद् र संग्रह अर्थात् अस्त्रप्रयोगका सहित सम्पूर्ण धनुर्वेदको अध्ययन गरिसक्नुभयो ॥२०॥ सान्दीपनि मुनिले उनीहरूको यसप्रकारको अलौकिक र असम्भव कार्यलाई देखेपछि उनले निश्चित रूपमा चन्द्रमा र सूर्य शिष्यको स्वरूपमा आफ्ना घरमा अर्थात् आश्रममा आउनुभएको रहेछ भन्ने निश्चय गरे ॥२१॥ उहाँहरू दुवैले गुरुद्वारा प्राप्त भएको उपदेशको आधारमा मात्र अर्थात् सुनेर मात्र सबै किसिमका अस्त्रहरूको शिक्षा हासिल गरिसकेपछि आफ्ना गुरु सान्दीपनि मुनिसँग भन्नुभयो– हामीबाट गुरुदक्षिणास्वरूप हजुरलाई जे प्राप्त गर्ने कामना छ, त्यो बताइदिनुहोस् ॥२२॥ त्यसपछि धर्मात्मा सान्दीपनि मुनिले उहाँहरूको अलौकिक कर्मलाई दृष्टिगत गर्दै अर्थात् ध्यानमा राख्दै उहाँहरूसँग गुरुदक्षिणास्वरूप प्रभास क्षेत्रको नुनको समुद्रमा डुबेर मरेको आफ्नो पुत्र माग्नुभयो ॥२३॥ त्यसपछि जब उहाँहरू शस्त्र उठाएर समुद्रका किनारमा पुग्नुभयो, त्यस समयमा समुद्रले अर्घ्य लिएर उहाँहरूका सामीप्य अर्थात् नजिकमा आएर भने– मैले सान्दीपनि मुनिका पुत्रलाई अपहरण गरेको छैन अर्थात् उनलाई मैले तानेको होइन ॥२४॥ हे असुर विनाशक मधुसूदन! शङ्खको स्वरूप धारण गरेको पञ्चजन नाम भएको दैत्य मेरो पानीमा निवास गर्दछ, त्यसैले ती बालकलाई आफ्नो नियन्त्रणमा लिएको छ ॥२५॥ **पराशरजीले भन्नुभयो–** समुद्रले

पराशर उवाच

इत्युक्तोऽन्तर्जलं गत्वा हत्वा पञ्चजनं खलम्।

कृष्णो जग्राह तस्यास्थिप्रभवं शङ्खमुत्तमम् ॥२६॥

यस्य नादेन दैत्यानां बलहानिरजायत।

देवानां ववृधे तेजो यात्यधर्मश्च संक्षयम् ॥२७॥

तं पाञ्चजन्यमापूर्य गत्वा यमपुरीं हरिः।

बलदेवश्च बलवान् जित्वा वैवस्वतं यमम् ॥२८॥

तं बालं यातनासंस्थं यथापूर्वशरीरिणम्।

पित्रे प्रदत्तवान् कृष्णो बलश्च बलिनां वरः ॥२९॥

मथुराञ्च पुनः प्राप्तावुग्रसेनेन पालिताम्।

पहृष्टपुरुषस्त्रीकावुभौ रामजनार्दनौ ॥३०॥

यसरी बताइसकेपछि परमात्मा श्रीकृष्णले पानीभित्र पसेर त्यो पञ्चजन नाम भएको दैत्यको वध गर्नुभयो र त्यसको हड्डीहरूबाट उत्पन्न भएको पाञ्चजन्य नाम भएको शङ्ख स्वयंले स्वीकार गर्नुभयो ॥२६॥ यस उत्तम शङ्खबाट निस्किएको आवाजले दैत्यहरूको बलमा ह्रास ल्याउँदछ अर्थात् उनीहरूको बलको विनाश गराउँछ एवम् देवताहरूको तेज बढाउँछ र अधर्मको विनाश हुन्छ ॥२७॥ यसपछि त्यो अत्यन्त महत्त्वपूर्ण एवम् अलौकिक पाञ्चजन्य नाम भएको शङ्ख बजाउँदै परमात्मा श्रीकृष्ण र अत्यन्त पराक्रमी बलराम यमलोकमा पुग्नुभयो र सूर्यपुत्र यममाथि विजय प्राप्त गर्नुभयो ॥२८॥ त्यसपछि परब्रह्म परमात्मा श्रीकृष्ण र बलवान्हरूमा सर्वोत्कृष्ट बलरामले यमराजको यातना उपभोग गरिरहेको त्यो बालकलाई पहिलेको जस्तै शरीरबाट सम्पन्न बनाइदिनुभएर गुरुदक्षिणास्वरूप सान्दीपनि मुनिलाई दिनुभयो ॥२९॥ त्यसपछि अत्यन्त पराक्रमी बलराम र परमात्मा श्रीकृष्ण दुवै उग्रसेनद्वारा पालनपोषण गरिएको मथुरा नगरीमा आउनुभयो। त्यस समयमा उहाँहरूलाई देखेर सम्पूर्ण मथुरानिवासी स्त्री र पुरुष अत्यन्त प्रसन्न भए ॥३१॥

इति श्रीविष्णुपुराणे पञ्चमांशे एकविंशोऽध्यायः।

ॐ

## द्वाविंशोऽध्यायः

## अध्याय - २२

### "जरासन्धस्य पराजयः"

(जरासन्धको पराजय)

पराशर उवाच

जरासन्धसुते कंस उपयेमे महाबलः ।

अस्तिं प्राप्तिञ्च मैत्रेय! तयोर्भर्तुहणं हरिम् ॥१॥

महाबलपरीवारो मगधाधिपतिर्बली ।

हन्तुमभ्याययौ कोपाज्जरासन्धः सयादवम् ॥२॥

उपेत्य मथुरां सोऽथ रुरोध मगधेश्वरः ।

अक्षौहिणीभिः सैन्यस्य त्रयोविंशतिभिर्वृतः ॥३॥

निष्क्रम्याल्पपरीवारावुभौ रामजनार्दनौ ।

युयुधाते समं तस्य बलिनौ बलिसैनिकैः ॥४॥

ततो बलश्च कृष्णश्च चक्राते मतिमुत्तमाम् ।

आयुधानां पुराणानामादाने मुनिसत्तम ॥५॥

अनन्तरं हरेः शार्ङ्ग तूणौ चाक्षयसायकौ ।

आकाशादागतौ विप्र! तथा कौमोदकी गदा ॥६॥

हलञ्च बलभद्रस्य गगनादागतं महत् ।

मनसोऽभिमतं विप्र! सौनन्दं मुसलं तथा ॥७॥

ततो युद्धे पराजित्य ससैन्यं मगधाधिपम् ।

पुरीं विविशतुर्वीरावुभौ रामजनार्दनौ ॥८॥

**पराशरजीले भन्नुभयो-** हे मैत्रेय! कंसले जरासन्धकी छोरीहरू अस्ति र प्राप्तिसँग विवाह गरेको थियो। यसकारण अत्यन्त बलवान् मगधदेशको राजा जरासन्ध ती दुवैका पतिको हत्या गर्ने परमात्मा श्रीकृष्ण र सम्पूर्ण यादवहरूको पूर्ण रूपमा विनाश गरिदिने अभिलाषाबाट अभिप्रेरित भएर अत्यन्त धेरै सैन्यबलसहित मथुरामा आक्रमण गर्न पूर्ण रूपमा तयार भएर आयो ॥१-२॥ त्यो मगधदेशको राजा जरासन्धले तेईस अक्षौहिणी अर्थात् १०९३५० पैदल सिपाही, ६५६१० घोडा, २१८७० रथ र २१८७० हात्ती भएको चतुरङ्गिणी सेनाका साथ आएर मथुरालाई चारैतिरबाट नाकाबन्दी गऱ्यो अर्थात् घेऱ्यो ॥३॥ त्यसपछि त्यस समयमा अत्यन्त बलशाली बलराम र परमात्मा श्रीकृष्ण अत्यन्त थोरै सेनाहरूलाई साथमा लिएर मथुरा नगरभन्दा बाहिर निस्किएर जरासन्धको अत्यन्त बलवान् सैनिकहरूसँग युद्ध गर्न थाल्नुभयो ॥४॥ हे मुनिश्रेष्ठ! त्यसपछि परमात्मा श्रीकृष्ण र अत्यन्त पराक्रमी बलरामले आफ्ना प्राचीन शस्त्रहरूलाई ग्रहण गर्नका सङ्कल्प गर्नुभयो अर्थात् आफ्ना ती प्राचीन शस्त्रहरूको स्मरण गर्नुभयो ॥५॥ हे ब्राह्मणश्रेष्ठ! परमात्मा श्रीहरिले स्मरण गर्नुभएपछि तत्कालै उहाँको शार्ङ्ग नाम भएको धनुष, अक्षय वाणसम्पन्न दुई ठोक्राहरू र कौमोदकी नाम भएको गदा आकाशमार्गबाट आएर उहाँको सामीप्यमा दाखिल भए ॥६॥ हे ब्राह्मण! बलरामसँग पनि उहाँको मनोकामनाअनुसारको अत्यन्त भयानक हलो र सुनन्द नाम भएको मुसल आकाशमार्गबाट आएर उहाँको सामीप्यमा दाखिल भए ॥७॥ त्यसपछि अत्यन्त पराक्रमी बलराम परब्रह्म परमात्मा श्रीकृष्ण मगध देशको राजा जरासन्धलाई युद्धमा पराजित गरेर अर्थात् जरासन्धमाथि विजय प्राप्त गरेर आफ्ना सैनिकहरू सहित फर्किएर मथुरा नगरीमा आउनुभयो ॥८॥ हे मुनिश्रेष्ठ! त्यो अत्यन्त दुराचारी दुष्टात्मा जरासन्धमाथि

जिते तस्मिन् सुदुर्वृत्ते जरासन्धे महामुने।
जीवमाने गते कृष्णस्तं नामयन्त निर्जितम् ॥९॥
पुरप्याजगामाथ जरासन्धो बलान्वितः।
जितश्च रामकृष्णाभ्यामपक्रान्तो द्विजोत्तम ॥१०॥
दस चाष्टौ च सङ्ग्रामानेवमत्यन्तदुर्मदः।
यदुभिर्मागधो राजा चक्रे कृष्णपुरोगमैः ॥११॥
सर्वेष्वेतेषु युद्धेषु यादवैः स पराजितः।
अपक्रान्तो जरासन्धः स्वल्पसैन्यैर्बलाधिकः ॥१२॥
तद् बलं यादवनां तैर्नजितं यदनेकशः।
तत्तु सन्निधिमाहात्म्यं विष्णोरंशस्य चक्रिणः ॥१३॥
मनुष्यधर्मशीलस्य लीला सा जगतः पतेः।
अस्त्राण्यनेकरूपाणि यदरातिषु मुञ्चति ॥१४॥
मनसैव जगत्सृष्टिं संहारञ्च करोति यः।
तस्यारिपक्षक्षपणे कोऽयमुद्यमविस्तरः ॥१५॥
तथापि यो मनुष्याणां धर्मस्तमनुवर्तते।
कुर्वन् बलवता सन्धिं हीनैर्युद्धं करोत्यसौ ॥१६॥
साम चोपप्रदानञ्च तथा भेदं प्रदर्शयन्।
करोति दाण्डपातञ्च क्वचिदेव पलायनम् ॥१७॥
मनुष्यदेहिनां चेष्टामित्येवमनुवर्ततः।
लीला जगत्पतेस्तस्य च्छन्दतः सम्प्रवर्त्तते ॥१८॥

विजय प्राप्त भए पनि जीवितावस्थामा फर्किन सफल भएकाले परमात्मा श्रीकृष्णले त्यसलाई पराजित भएको स्वीकार गर्नुभएन ॥९॥ हे ब्राह्मणश्रेष्ठ! केही समयपछि त्यो अत्यन्त दुराचारी एवम् दुष्टात्मा जरासन्ध फेरि पहिलेकै जति सैन्यबल साथमा लिएर मथुरामा आक्रमण गर्न आयो, तर त्यस समयमा पनि अत्यन्त पराक्रमी बलराम र परमात्मा श्रीकृष्णसँग पराजित भएर भाग्यो ॥१०॥ अत्यन्त दुराचारी एवं अहङ्कारी मगधदेशको राजा जरासन्धले यस किसिमबाट मथुरानिवासी यदुवंशीहरूसँग अठारपटकसम्म युद्ध गर्‍यो ॥११॥ तर, यी सबै युद्धहरूमा अत्यधिक मात्रामा धेरै सैन्यबल भएको दुराचारी जरासन्ध अत्यन्त थोरै सैन्यबल भएका यदुवंशीहरूबाट पराजित भएर भागेर गइहाल्दथ्यो ॥१२॥ यादवंशीहरूको सेना अत्यन्त अल्प अर्थात् थोरैमात्र भए तापनि जरासन्धको अत्यन्त विशाल सेनासँग कहिल्यै पराजित हुँदैनथ्यो। यसमा केवल सुदर्शन चक्र धारण गर्नुहुने परमात्मा श्रीविष्णुको अंशावतार परमात्मा श्रीकृष्णको सामीप्यताको महत्त्व रहेको थियो ॥१३॥ यो मनुष्य–धर्मको पालना गरिरहनुभएका उहाँ सम्पूर्ण जगत्का अधिपतिको लीला हो, जसमा उहाँले आफ्ना शत्रुहरूमाथि अनेकौं प्रकारका दिव्य शस्त्रहरूको प्रहार गर्नुहुन्छ ॥१४॥ जुन परमात्माले आफ्नो सङ्कल्पमात्रबाट नै यो सम्पूर्ण संसारको उत्पत्ति र विनाश गरिदिनुहुन्छ, उहाँलाई आफ्ना शत्रुहरूको विनाश गर्नका लागि अन्य किसिमका प्रयास गरिरहनुको कुनै प्रयोजन रहँदैन अर्थात् औचित्य नै छैन ॥१५॥ तथापि उहाँले अत्यन्त बलवान्हरूसँग सन्धि वा सम्झौता र कम शक्ति भएकाहरूसँग युद्ध गरेर मनुष्य धर्मको अनुकरण अर्थात् पालना गरिरहनुभएको छ ॥१६॥ उहाँले कसैमाथि साम, कसैमाथि भेद र कसैमाथि दामनीतिको अवलम्बन गर्नुहुन्छ र कसैमाथि दण्डनीतिको प्रयोग पनि गर्नुहुन्छ तथा कहिले–कहिले आफू स्वयं पनि भागिदिनुहुन्छ ॥१७॥ यसरी मनुष्य शरीर धारण गर्नेहरूको व्यावहारिक पक्षको अनुसरण गर्नुहुँदै जगत्का अधिपति परब्रह्म परमात्माका अनेकौं प्रकारका लीलाहरू भइरहेका हुन्छन् ॥१८॥

इति श्रीविष्णुमहापुराणे पञ्चमांशे द्वाविंशोऽध्यायः।



## त्रियोविंशोऽध्यायः

## अध्याय – २३

### "द्वारकाया दुर्गनिर्माणम्, कालयवनदहनम्, मुचुकुन्दस्य भगवत्स्तुतिश्च"

(द्वारकामा दुर्ग निर्माण, कालयवन भष्म तथा मुचुकुन्दद्वारा भगवान्‌को स्तुति)

**पराशर उवाच**

गार्ग्य गोष्ठे द्विजं श्याल षण्ढ इत्युक्तवान् द्विज ।

यदूनां सन्निधौ सर्वे जहसुः सर्वयादवाः ॥१॥

ततः कोपसमामिष्ये दक्षिणाब्धिमुपेत्य सः ।

सुतमिच्छंस्तपस्तेपे यदुचक्रभयावहम् ॥२॥

आराधयन् महादेवं सोऽयश्चूर्णममक्षयत् ।

ददौ वरञ्च तुष्येस्मै वत्सरे द्वादशे हरः ॥३॥

सभाजयामास च तं यवनेशो ह्यनात्मजः ।

तद्योषित्सङ्गमाच्चास्य पुत्रोऽभूदलिसन्निभः ॥४॥

तं कालयवनं नाम राज्ये स्वे यवनेश्वरः ।

अभिषिच्य वनं यातो वज्राग्रकठिनोरसम् ॥५॥

स तु वीर्यमदोन्मत्तः पृथिव्यां बलिनो नृपान् ।

पप्रच्छ नारदस्तस्मै कथयामास यादवान् ॥६॥

म्लेच्छकोटिसहस्राणां सहस्रैर्बहुभिर्वृतः ।

गजाश्वरथपत्त्योधैश्चकार परमोद्यमम् ॥७॥

**पराशरजीले भन्नुभयो**– हे ब्राह्मणश्रेष्ठ! एक समय यादवहरूको सभामा गार्ग्यको सालाले उनलाई अर्थात् गार्ग्य ऋषिलाई नपुंसक भनिदियो । त्यस समयमा सबै यदुवंशीहरू हाँस्न थाले ॥१॥ यसबाट अत्यन्त क्रोधित भएका गार्ग्य ऋषिले दक्षिणी समुद्रका किनारमा गएर सबै यादववंशीलाई पूर्ण रूपमा भयभीत गराउने सामर्थ्य भएको पुत्र प्राप्तिको लक्ष्य लिएर अत्यन्त घोर तपस्या गर्न थाले ॥२॥ उनले श्रीमहादेवको उपासनामा यथार्थ रूपमा लीन भएर लोहचूर्ण अर्थात् फलामको धूलोको भोजन गरे अर्थात् फलामको धूलो खाए। त्यसपछि बाह्र वर्षमा प्रसन्न भएर भगवान् श्रीमहादेवले उनलाई मनोकामना अनुसारको वरदान दिनुभयो ॥३॥ एक पुत्रविहीन यवनराजले महर्षि गार्ग्यको अत्यन्त तत्परतापूर्वक सेवा गरेर उनलाई सन्तुष्ट अर्थात् प्रसन्न गराए । उसको सेवाबाट अत्यन्त प्रसन्न भएर गार्ग्यले उसकी अर्थात् यवनराजकी पत्नीसँग सहवास अर्थात् समागम गरे अथवा सम्भोग गरे, जसबाट अङ्गारजस्तै कालो वर्ण भएको एक पुत्र उत्पन्न भयो ॥४॥ त्यसपछि ती यवनराजले वज्रजस्तो अत्यन्त कठोर छाती भएको आफ्नो कालयवन नाम भएको त्यस पुत्रलाई राजाको पदमा राज्याभिषेक गरिदिएर आफू तपस्या गर्नका लागि अत्यन्त भयानक वनमा गए ॥५॥ यसपछि त्यो आफ्नो पराक्रममा अत्यन्त गर्व गरेर पूर्ण रूपमा उन्मत्त भएको कालयवनले देवर्षि नारदसँग पृथ्वीमा रहेका अत्यधिक बलशाली राजाहरूको विषयमा सोध्यो । त्यसपछि नारदले उसलाई यादवहरू मात्र अत्यन्त बलशाली रहेको बताइदिए ॥६॥ देवर्षि नारदको यस प्रकारको कुरा सुनेपछि त्यो कालयवनले हजारौं हात्ती, घोडा र रथहरूबाट परिपूर्ण भएको हजारौं करोडौं म्लेच्छ सेनालाई एकत्रित अर्थात् जम्मा गरेर पूर्ण रूपमा युद्धको तयारी गर्‍यो ॥७॥ तथा हे मैत्रेय! यादवहरूसँग

प्रययौ चाव्यवच्छिन्नं छिन्नयानो दिने दिने।

यादवान् प्रति सामर्षो मैत्रेय! मथुरापुरीम् ॥८॥

कृष्णोऽपि चिन्तयामास क्षयितं यादवं बलम्।

यवनेन रणे गम्यं मागधस्य भविष्यति ॥९॥

मागधस्य बलं क्षीणं स कालयवनो बली।

हन्ता तदिदमायातं यदूनां व्यसनं द्विधा ॥१०॥

तस्माद् दुर्गं करिष्यामि यदूनामतिदुर्जयम्।

स्त्रियोऽपि यत्र युद्धेयुः किं पुनर्वृष्णिपुङ्गवाः ॥११॥

मयि मत्ते प्रमत्ते वा सुप्ते प्रवसिते तथा।

यादवाभिभवं दुष्टा मा कुर्वन् परयोधका ॥१२॥

इति सञ्चिन्त्य गोविन्दो योजनानि महोदधिम्।

ययाचे द्वादश पुरीं द्वारकां तत्र निर्ममे ॥१३॥

महोद्यानां महावप्रां तडागशतशोभितम्।

प्राकारगृहसम्बाधामिन्द्रस्येवामरावतीम् ॥१४॥

मथुरावासिनो लोकांस्तत्रानीय जनार्दनः।

आसन्ने कालयवने मथुरां च स्वयं ययौ ॥१५॥

अत्यन्त क्रोधित भएर त्यो कालयवन यात्राका समयमा बाटोका बीचमा अर्थात् बाटामा हात्ती तथा घोडाहरू अत्यन्त थकित भएपछि त्यसै समयमा अन्य वाहनहरूमा सवार भएर प्रतिदिन निरन्तर रूपमा अर्थात् विश्राम नगरी हिँडिरहेर अर्थात् हिँड्दाहिँड्दा मथुरापुरीमा पुग्यो ॥८॥ एकातिर जरासन्धको आक्रमण र अर्कोतिर कालयवनको चढाइ देखेर परमात्मा श्रीकृष्णले चिन्तन गर्नुभयो– कालयवनसँग युद्ध गर्नाले क्षीण भएको यादव सेना अवश्य पनि मगधदेशका राजा जरासन्धसँग पराजित हुनेछ ॥९॥ तथा यदि पहिला मगधदेशका राजासँग युद्ध गरियो भने त्यसबाट क्षीण भएको यादव सेनालाई कालयवनले पूर्ण रूपमा नष्ट गरिदिनेछ। यसप्रकार एकै समयमा यादवहरूमा दुई किसिमको विपत्ति आइलाग्यो अर्थात् उनीहरू दुइतिरको चपेटामा परे ॥१०॥ त्यसकारण यस समयमा म यादवहरूका लागि यस्तो किसिमको दुर्ग अर्थात् गढ वा किल्ला बनाउँछु, जहाँ बसेर यदुवीरहरूको कुरै नगरौं यादवका स्त्रीहरूले पनि अत्यन्त सहज रूपमा युद्ध गर्न सक्नेछन् ॥११॥ त्यस दुर्ग अर्थात् किल्ला वा गढमा निवास गरेपछि यदि म असावधान भएँ, निदाएँ अथवा कतै बाहिर गएको अवस्था भए पनि त्यस अवस्थामा पनि दुष्ट शत्रुहरूले यादवहरूलाई पराजित गराउन नसकून् ॥१२॥ परमात्मा श्रीगोविन्दले यसरी चिन्तन गरेर महासागरसँग बाह्र योजन जमिन मागेर त्यस स्थानमा द्वारका नाम भएको अत्यन्त सुन्दर नगरको निर्माण गर्नुभयो ॥१३॥ जुन द्वारकापुरी इन्द्रको अमरावती जस्तै अत्यन्त ठूलाठूला बगैंचाहरू, गहिरो खाई अर्थात् चारैतिर अग्लो, बीचमा गहिरो भएको जमिन अथवा खाल्डो वा खाडल, सैकडौं तलाउहरू र अनेकौं महल एवम् घरहरूद्वारा पूर्ण रूपमा सजिएको थियो ॥१४॥ त्यसपछि कालयवन अत्यन्त नजिकमा आएपछि परब्रह्म परमात्मा श्रीजनार्दनले सम्पूर्ण मथुराका वासिन्दाहरूलाई लिएर द्वारकामा आउनुभयो र फेरि आफूमात्र मथुरामा फर्कनुभयो ॥१५॥ त्यसपछि जब कालयवनका सेनाले मथुरालाई चारैतिरबाट

बहिरावासिते सैन्ये मथुराया निरायुधः।

निर्जगाम स गोविन्दो ददृशे यवनेश्वरम् ॥१६॥

स ज्ञात्वा वासुदेवं तं बाहुप्रहरणं नृपः।

अनुयातो महायोगिचेतोभिः प्राप्यते न यः ॥१७॥

तेनानुयातः कृष्णोऽपि प्रविवेश महागुहाम्।

यत्र शेते महावीर्यो मुचुकुन्दो नरेश्वर ॥१८॥

सोऽपि प्रविश्य यवनो दृष्ट्वा शय्यागतं नृपम्।

पादेन ताडयामास मत्वा कृष्णं सुदुर्मतिः ॥१९॥

दृष्टमात्रस्तु तेनासौ जज्वाल यवनोऽग्निना।

तत्क्रोधजेन मैत्रेय! भस्मीभूतश्च तत्क्षणात् ॥२०॥

स हि देवासुरे युद्धे गतो जित्वा महासुरान्।

निद्रार्तः सुमहाकालं निद्रां वव्रे वरं सुरान् ॥२१॥

प्रोक्तश्च देवैः संसुप्तं यस्त्वामुत्थापयिष्यति।

देहजेनाग्निना सद्यः स तु भस्मीभविष्यति ॥२२॥

एवं दग्ध्वा स तं पापं दृष्ट्वा च मधुसूदनम्।

कस्त्वमित्याह सोऽप्याह जातोऽहं शशिनः कुले।

वसुदेवस्य तनयो यदुवंशसमुद्भवः ॥२३॥

मुचुकुन्दोऽपि तत्रासौ वृद्धगार्ग्यवचोऽस्मरत्।

संस्मृत्य प्राणिपत्यैनं सर्वभूतेश्वरं हरिम् ॥२४॥

घेराबन्दीमा पारे, त्यस समयमा परब्रह्म परमात्मा श्रीकृष्ण पूर्ण रूपमा अस्त्रशस्त्र परित्याग गरेर मथुराबाट बाहिर निस्किनुभयो । यसरी उहाँ निस्किनुभएको कालयवनले देख्यो ॥१६॥ महात्मा योगीहरूको अन्तरात्माले पनि प्राप्त गर्न नसकिनुहुने र आफ्नो हातरूपी शस्त्रहरूबाट सम्पन्न हुनुभएका परमात्मा श्रीवसुदेवलाई अस्त्रविहीन अवस्थामा रहनुभएको देखेर कालयवन उहाँका पछिपछि दौडियो ॥१७॥ यसरी कालयवनद्वारा पीछा गरिनुभएका परमात्मा श्रीकृष्ण पनि त्यो अत्यन्त महान् गुफाभित्र प्रवेश गर्नुभयो, जहाँ अत्यन्त पराक्रमी राजा मुचुकुन्द सुतिरहेका थिए ॥१८॥ त्यो अत्यन्त दुर्बुद्धि भएको कालयवनले पनि त्यस गुफाभित्र प्रवेश गरेर सुतिरहेका राजा मुचुकुन्दलाई नै यादवश्रेष्ठ कृष्ण सम्झिएर लात्तीले हिर्कायो ॥१९॥ हे मैत्रय! त्यसबाट राजा मुचुकन्दको निद्रा टुट्यो अर्थात् उनी बिउँझिए र अब राजाले कालयवनलाई हेरे, त्यसै समयमा ऊ राजाको क्रोधाग्निबाट पूर्ण रूपमा जलेर भष्म भयो ॥२०॥ प्राचीन समयमा राजा मुचुकुन्द देवताहरूका पक्षबाट देवता र असुरहरूको युद्धमा गएका थिए। त्यस समयमा असुरहरूलाई मारिसकेपछि अत्यन्त निद्रा लागेका कारणले गर्दा उनले देवताहरूसँग अत्यन्त धेरै समयसम्म सुत्नका लागि वरदान मागेका थिए ॥२१॥ त्यस समयमा देवताहरूले पनि उनीसँग जुनसुकै मनुष्यले तिमीलाई निद्रावस्थामा व्यवधान उत्पन्न गराएर बिउँझाउँछ, त्यो त्यसै समयमा तिम्रो शरीरबाट उत्पन्न भएको अग्निबाट जलेर पूर्ण रूपमा भस्म हुनेछ भनेका थिए ॥२२॥ यसप्रकार अत्यन्त बलशाली राजा मुचुकुन्दले त्यो दुराचारी कालयवनलाई पूर्ण रूपमा भस्म गराइदिएपछि परमात्मा श्रीमधुसूदनलाई देखेर सोधे– तपाईं को हुनुहुन्छ? त्यस समयमा परमात्मा श्रीकृष्णले भन्नुभयो– म चन्द्रवंशअन्तर्गत यदुकुलमा उत्पन्न हुनुभएका आनकदुन्दुभि वसुदेवको पुत्र हुँ ॥२३॥ त्यस समयमा अत्यन्त बलशाली राजा मुचुकन्दले वयोवृद्ध महर्षि गार्ग्यको वचन स्मरण गरे अर्थात् सम्झिए र त्यसै समयमा सम्पूर्ण जीवमात्रका ईश्वर श्रीहरिलाई प्रणाम गर्दै भने... ॥२४॥ हे परमेश्वर! मैले हजुर परमात्मा

प्राह ज्ञातो भवान् विष्णोरंशस्त्वं परमेश्वरः।
पुरा गार्ग्येण कथितमष्टाविंशातिमे युगे।
द्वापरान्ते हरेर्जन्म यदोर्वंशे भविष्यति ॥२५॥
स त्वं प्राप्तो न सन्देहो मर्त्यानामुपकारकृत्।
तथापि सुमहत् तेजो नालं सोढुमहं तव ॥२६॥
तथा हि सजलाम्भोदनादधीरतरं तव।
वाक्यं नमति चैवोर्वी यस्य पादप्रपीडिता ॥२७॥
देवासुरे महायुद्धे दैत्यसैन्ये महाभटाः।
न शेकुर्मम तत्तेजस्त्वत्तेजो न सहाम्यहम् ॥२८॥
संसारपतितस्यैको जन्तोस्त्वं शरणं परम्।
स प्रसीद प्रपन्नार्त्तिहर्ता हर ममाशुभम् ॥२९॥
त्वं पयोनिधयः शैलाः सरितस्त्वं वनानि च।
मेदिनी गगनं वायुरापोऽग्निस्त्वं तथा मनः ॥३०॥
बुद्धिरब्याकृता प्राणाः प्राणेशस्त्वं तथा पुमान्।
पुंसः परतरं यच्च व्याप्यजन्माविकारि यत् ॥३१॥
शब्दादिहीनमजरममेयं क्षयवर्जितम्।
अवृद्धिनाशं तद्ब्रह्म त्वमाद्यन्तविवर्जितम् ॥३२॥
त्वत्तोऽमराः सपितरो यक्षगन्धर्वकिन्नराः।
सिद्धाश्चाप्सरसस्त्वत्तो मनुष्याः पशवः खगाः ॥३३॥

श्रीविष्णुको अंश हुनुभएको सत्य जानिसकैं। किनकि परापूर्वकालमा महर्षि गार्ग्यले मलाई अठाईसौं चतुर्युगीमा द्वापर युगको अन्त्यमा यदुवंशमा परब्रह्म परमात्मा श्रीहरिले जन्म लिनुहुने कुरा बताउनुभएको थियो ॥२५॥ सांसारिक मानवमात्रको कल्याण गरिदिनका लागि हजुरले परमात्मा श्रीविष्णुको अंशबाट जन्म अर्थात् अवतार लिनुभएको हो। तर, म हजुरबाट उत्पन्न भएको यो महातेजलाई सहन गर्न पूर्ण रूपमा असमर्थ भइरहेको छु ॥२६॥ हे भगवान्! हजुरका वचनहरू पानीले परिपूर्ण भएको मेघ अर्थात् बादल जस्तै अत्यन्त गम्भीर छन् तथा हजुरका चरणहरूको भार अर्थात् बोझ थाम्न नसकेर पृथ्वी भास्सिइरहेकी छिन् ॥२७॥ देवता र असुरहरूको युद्धमा दैत्य सेनाका बीचमा ठूलाठूला योद्धाहरू पनि मेरो अत्यन्त सर्वोत्कृष्ट तेजलाई सहन गर्न असमर्थ भएका थिए; तर आज म हजुरको तेजलाई सहन गर्न पूर्ण रूपमा असमर्थ भइरहेको छु ॥२८॥ संसारमा पूर्ण रूपले पतित भएका अर्थात् नीच योनिमा झरेका प्राणीहरूको हजुर एकमात्र परम आश्रय एवं रक्षक हुनुहुन्छ। त्यसकारण हजुरले ती प्राणीहरूको दुःख निवारण गरिदिनुहोस् अर्थात् उनीहरूलाई दुःखबाट पूर्ण रूपमा मुक्त गराइदिनुहोस्। हजुर प्रसन्न भइदिनुहोस् तथा मेरो अमङ्गलको विनाश गरिदिनुहोस् अर्थात् मेरो रक्षा गरिदिनुहोस् ॥२९॥ हजुर नै सबै समुद्र, पर्वत, नदीनाला, सम्पूर्ण वन, पृथ्वी, आकाश, वायु, पानी र मनस्वरूप हुनुहुन्छ अर्थात् यो सम्पूर्ण जगत् र सबै इन्द्रियहरू हजुरकै स्वरूप हुन् ॥३०॥ हे भगवान्! हजुर नै बुद्धि र प्रकृतिस्वरूप हुनुहुन्छ, हजुर नै प्राणस्वरूप, हजुर नै पुरुषस्वरूप र पुरुषका तुलनामा विकाररहित व्यापक, अजन्मा तथा जुन सर्वोत्कृष्ट वस्तु छ, त्यो तत्त्व पनि हजुर नै हुनुहुन्छ ॥३१॥ हजुरको आदि र अन्त्य पनि छैन, हजुर वृद्धि एवम् विनाशबाट रहित, शब्दादिबाट रहित, अजर, अक्षय र नाप्न वा जप्न नसकिने परब्रह्म परमात्मा हुनुहुन्छ ॥३२॥ देवताहरू, पितृहरू, यक्ष, गन्धर्व, किन्नर, सिद्ध र अप्सराहरू पनि हजुरबाटै उत्पन्न भएका हुन् तथा हजुरबाटै मनुष्य, पशु एवं पक्षीहरू पनि उत्पन्न भएका हुन् ॥३३॥ सम्पूर्ण मृग,

सरीसृपा मृगाः सर्वे त्वत्तः सर्वे महीरुहाः ॥
यच्च भूतं भविष्यञ्च किञ्चिदत्र चराचरम् ॥३४॥
अमूर्तं मूर्तमथवा स्थूलं सूक्ष्मतरं स्थितम् ।
तत्सर्वं त्वं जगत्कर्ता नास्ति किञ्चित् त्वया विना ॥३५॥
मया संसारचक्रेऽस्मिन् भ्रमता भगवन् सदा ।
तापत्रयाभिभूतेन न प्राप्ता निर्वृतिः क्वचित् ॥३६॥
दुःखान्येव सुखानीति मृगतृष्णा जलाशया ।
तथा नाथ! गृहीतानि तानि तापाय चाभवन् ॥३७॥
राष्ट्रमूर्वी बलं कोशो मित्रपक्षस्तथात्मजाः ।
भार्या भृत्यजना ये च शब्दाद्या विषयाःप्रभो ॥३८॥
सुखबुद्ध्या मया सर्वं गृहीतमिदमव्यय ।
परिणामे तदेवेश तापात्मकमभून्मम ॥३९॥
देवलोकमिमं प्राप्तो नाथ! देवगणेऽप्ययम् ।
मत्तः साहाय्यकामोऽभूच्छश्वती कुत्र निर्वृतिः ॥४०॥
त्वामनाराध्य जगतां सर्वेषां प्रभवास्पदम् ।
शाश्वती प्राप्यते केन परमेश्वर ! निर्वृतिः ॥४१॥
त्वन्मायामूढमनसो जन्ममृत्युजरादिकान् ।
अवाप्य तापान् पश्यन्ति प्रेतराजाननं नराः ॥४२॥

सर्प, पर्वतहरू हजुरबाटै उत्पन्न भएका हुन् तथा जेजति पनि चराचर उत्पन्न भइसकेका छन् अथवा भविष्यमा हुनेछन्, ती सबै हजुरबाटै उत्पन्न भएका हुन् र हुनेछन् पनि ॥३४॥ हे सम्पूर्ण जगत्का उत्पत्तिकर्ता परमात्मा! मूर्त, अमूर्त, स्थूल, सूक्ष्म अथवा स्थिर स्वभाव भएका जेजति पदार्थहरू रहेका छन्, ती सबैमा हजुर नै परिपूर्ण भएर रहनुभएको छ, हजुरभन्दा अलग कुनै वस्तु वा पदार्थ रहेको छैन ॥३५॥ हे भगवान्! आध्यात्मिक, आधिदैविक र आधिभौतिक यी तीन किसिमका तापहरूबाट सम्पन्न भएर म यो सांसारिक चक्रमा निरन्तर रूपमा घुमिरहेको छु र कुनै पनि समयमा मैले शान्ति प्राप्त गर्न सकिरहेको छैन ॥३६॥ हे नाथ! पानी प्राप्त गर्ने आशा गरिरहेको मृगको अधुरो तृष्णा जस्तो भ्रान्त धारणा लिएर मैले दुःखहरूलाई सुख सम्झिएँ र यसबाट म अहिले अत्यन्त दुःखी भइरहेको छु ॥३७॥ हे प्रभु! हे अव्यय! राज्य, पृथ्वी, सैन्यबल, धन, मित्रहरू, सन्तानहरू, स्त्री, सेवक एवं शब्दजस्ता जुन विषयवासना रहेका छन्, यी सबै विषयवस्तुहरूलाई अत्यन्त सुखको साधन सम्झिएर स्वीकार गरेको थिएँ तर हे ईश्वर! अन्त समयमा यी सबै मेरा लागि अत्यन्त दुःखदायक भए अर्थात् यिनीहरूबाट मैले कहिल्यै पनि कुनै किसिमको सुख प्राप्त गर्न सकिँन ॥३८–३९॥ हे नाथ! जब म सम्पूर्ण देवताहरूले देवलोक प्राप्त गरेर पनि असुरहरूमाथि विजय प्राप्त गर्नका लागि मसँग सहायता पाउन प्रार्थना गरेका थिए भने शाश्वत अर्थात् परम शान्ति कहाँ पाउन सकिन्छ अर्थात् त्यसले कहाँ निवास गर्दछ? ॥४०॥ हे परमेश्वर! यो सम्पूर्ण जगत्को कारणस्वरूप रहनुभएका हजुरको उपासनाबाहेक अन्य कुनै पनि साधनाद्वारा शाश्वत अर्थात् परम शान्ति प्राप्त गर्न सकिँदैन अर्थात् सम्भव छैन ॥४१॥ हे परमात्मा ! हजुरकी योगमायाबाट पूर्ण रूपमा मोहित भएको मनुष्य जन्म, मृत्यु र वृद्धावस्था आदिको पीडा सहन गर्दै अन्त्यमा यमराजको यमलोकमा गएर उनको दर्शन गर्दछ ॥४२॥ हजुरको स्वरूपका षियमा ज्ञान हासिल गर्न नसकेको मनुपयले विभिन्न नरकहरूमा गएर

ततो निजक्रियासूतिनरकेष्वतिदारुणम्।
प्राप्नुवन्ति नरा दुःखमस्वरूपविदस्तव ॥४३॥
अहमत्यन्तविषयी मोहितस्तव मायया।
ममत्वगर्वगर्तान्तर्भ्रमामि परमेश्वर ॥४४॥
सोऽहं त्वां शरणमपारमीशमीड्यं
सम्प्राप्तः परमपदं यतो न किञ्चित्।
संसारश्रमपरितापतप्तचेता
निर्वाणे परिणतधाम्नि साभिलाषः ॥४५॥

आफ्नूद्वारा गरिएका कर्महरूको फलस्वरूप अनेकौं किसिमका भयानक एवं दुःखदायी कष्टहरूको उपभोग गर्नुपर्दछ ॥४३॥ हे परमेश्वर! म विषयहरूको उपभोगमा अत्यन्त आसक्त छु र हजुरको योगमायाबाट पूर्ण रूपमा मोहित भएर ममता र घमण्डको खाडलमा परेर यताउता घुमिरहेको छु ॥४४॥ त्यही अत्यन्त पीडित म आज अपार र अप्रमेय परमपदस्वरूप हजुरका शरणमा पर्न आएको छु। किनकि संसारमा हजुरभन्दा अलग केही पनि छैन। यो संसाररूपी तापबाट अत्यन्त पीडित अन्तरात्मा भएको म अत्यन्त तेजोमय परमपदस्वरूप हजुरलाई प्राप्त गर्न अत्यन्त लालायित भएको छु अर्थात् प्राप्त गर्ने अभिलाषा गर्दछु ॥४५॥

इति श्रीविष्णुमहापुराणे पञ्चमांशे त्रयोविंशोऽध्यायः।



## चतुर्विंशोऽध्यायः

## अध्याय – २४

### "तपसे मुचुकुन्दस्य प्रस्थानम्, बलरामस्य व्रजयात्रा च"

(मुचुकुन्द तपस्या गर्नका लागि प्रस्थान तथा बलरामको व्रजयात्रा)

पराशर उवाच

इत्थं स्तुतस्तदा तेन मुचुकुन्देन धीमता ।
प्राहेशः सर्वभूतानामनादिर्भगवान् हरिः ॥१॥

श्रीभगवानुवाच

यथाभिवाञ्छितान् दिव्यान् गच्छ लोकान् नरेश्वर ।
अव्याहतपरैश्वर्यो मत्प्रसादोपबृंहितः ॥२॥
भुक्त्वा भोगान् महादिव्यान् भविष्यसि महाकुले ।
जातिस्मरो मत्प्रसादात् ततो मोक्षमवाप्स्यसि ॥३॥

पराशर उवाच

इत्युक्तः प्रणिपत्येशं जगतामच्युतं नृपः ।
गुहामुखाद् विनिष्क्रान्तो ददृशे सोऽल्पकान् नरान् ॥४॥
ततः कलियुगं ज्ञात्वा प्राप्तं तप्तुं नृपस्तपः ।
नरनारायणस्थानं प्रययौ गन्धमादनम् ॥५॥
कृष्णोऽपि घातयित्वारिमुपायेन हि तद्बलम् ।
जग्राह मथुरामेत्य हस्त्यश्वस्यन्दनोज्ज्वलम् ॥६॥
आनीय चोग्रसेनाय द्वारवत्यां न्यवेदयत् ।
पराभिभवनिःशङ्कं बभूव च यदोः कुलम् ॥७॥
बलदेवोऽपि मैत्रेय! प्रशान्ताखिलविग्रहः ।
ज्ञातिसन्दर्शनोत्कण्ठः प्रययौ नन्दगोकुलम् ॥८॥

**पराशरजीले भन्नुभयो–** अत्यन्त बुद्धिमान् राजा मुचुकुन्दले यस प्रकार स्तुति गरेपछि सम्पूर्ण प्राणीमात्रका अधिपति परब्रह्म परमात्मा श्रीहरिले भन्नुभयो ॥१॥ **श्रीभगवान्ले भन्नुभयो–** हे नरेश! तिमी आफ्नो मनोकामना अनुसारको दिव्य लोकमा जाऊ। मेरा कृपाको प्रभावले तिमीलाई कुनै किसिमको बाधा–व्यवधान नभएको ऐश्वर्यको प्राप्ति हुनेछ ॥२॥ त्यहाँ दिव्य लोकमा दिव्य भोगहरूको उपभोग गरिसकेपछि तिमीले पृथ्वीमा आफ्नो पूर्वजन्मको स्मरणका साथ एउटा अत्यन्त उत्तम कुलमा जन्म लिनेछौ तथा फेरि मेरो कृपाको प्रभावले मोक्ष प्राप्त गर्नेछौ ॥३॥ **पराशरजीले भन्नुभयो–** परमात्माले यस किसिमको आज्ञा दिनुभएपछि राजा मुचुकुन्दले जगदीश्वर परमात्मा श्रीअच्युतलाई प्रणाम गरेर गुफाबाट बाहिर निस्किएर हेर्दा पृथ्वीका सबै मनुष्यहरू अत्यन्त होचा–होचा भएको देखे ॥४॥ त्यसपछि संसारमा कलियुग आरम्भ भइसकेको जानेर राजा मुचुकुन्द तपस्या गर्ने मनसायले श्रीनरनारायणको निवासस्थान गन्धमादन नाम भएको अत्यन्त पवित्र पर्वतमा गए ॥५॥ यसप्रकार परमात्मा श्रीकृष्णले माथि बताइएको उपायका माध्यमद्वारा मथुराका शत्रुको पूर्ण रूपमा विनाश गरिदिनु भएपछि फेरि मथुरामा आउनुभयो र त्यहाँ रहेको हात्ती, घोडा आदिबाट अत्यधिक मात्रामा सुशोभित भएको सेनालाई आफ्नो नियन्त्रणमा लिएर त्यसलाई द्वारकामा ल्याएर राजा उग्रसेनलाई दिनुभयो। त्यस समयदेखि यदुवंश शत्रुले दमन गर्ने आशङ्काबाट पूर्ण रूपमा निर्भय भयो ॥६–७॥ हे मैत्रेय! सबै किसिमको युद्ध यथार्थ रूपमा शान्त भइसकेपछि बलराम नन्दगोपको दर्शन गर्न अत्यन्त उत्साहित हुनुभएकाले नन्दगोकुलमा जानुभयो ॥८॥

ततो गोपीश्च गोपांश्च यथापूर्वममित्रजित्।

तथैवाभ्यवदत् प्रेम्णा बहुमानपुरः सरम् ॥९॥

कैश्चापि सम्परिष्वक्तः कांश्चित् स परिषष्वजे।

हास्यञ्चक्रे समं कैश्चिद् गोपैर्गोपीजनैस्तथा ॥१०॥

प्रियाण्यनेकान्यवदन् गोपास्तत्र हलायुधम्।

गोप्यश्च प्रेमकुपिताः प्रोचुः सेर्ष्यमथापराः ॥११॥

गोप्यः पप्रच्छुरपरा नागरीजनवल्लभः।

कच्चिदास्ते सुखं कृष्णश्चलत्प्रेमलवात्मकः? ॥१२॥

अस्मच्चेष्टामुपहसन् कच्चिन्न पुरयोषितम्।

सौभाग्यमानमधिकं करोति क्षणसौहृदः? ॥१३॥

कच्चित् स्मरति तं कृष्णो गीतानुगमनं कलम्।

अप्यसौ मातरं द्रष्टुं सकृदप्यागमिष्यति? ॥१४॥

अथवा किं तदालापैरपरा क्रियतां कथा।

तस्यास्माभिर्विना तेन विनास्माकं भविष्यति ॥१५॥

पिता माता तथा भ्राता भर्ता बन्धुजनश्च किम्।

न त्यक्तस्तत्कृतेऽस्माभिरकृतज्ञध्वजो हि सः ॥१६॥

शत्रुविजयी बलरामले गोकुलमा आएर पहिला–पहिला जसरी नै अत्यन्त आदरभाव राख्दै प्रेमपूर्वक गोप र गोपिनीहरूलाई अभिवादन गर्नुभयो ॥९॥ त्यसपछि कसै–कसैले बलरामलाई आलिङ्गन गरे अर्थात् अङ्गालो मारेर छातीमा टाँस्दै प्रेम व्यक्त गरे तथा बलरामले पनि कसै–कसैलाई आलिङ्गन गर्नुभयो। कुनै कुनै गोप र गोपिनीहरूसँग ख्यालठट्टा पनि गर्न थाल्नुपभयो ॥१०॥ ती गोपहरूसँग अत्यन्त आत्मीयपूर्वक कुराकानी हुन थाल्यो, तर अन्य गोपिनीहरू प्रेमपूर्वक रिसाउँदै बलरामसँग इर्ष्यासम्पन्न कुराकानी गर्नमा अत्यन्त व्यस्त भए अर्थात् कुराकानी गर्न थाले ॥११॥ कुनै–कुनै गोपिनीहरूले बलरामसँग सोधे– अत्यन्त चञ्चल एवम् क्षणिक प्रेम गर्ने जसको स्वभाव रहेको छ, उहाँ परमात्मा श्रीकृष्ण नगरका अत्यन्त सुन्दरी नारीहरूका प्राणका आधार अत्यन्त आनन्दपूर्वक बस्नुभएको होला ॥१२॥ कसैले भने– क्षणिक अर्थात् थोरै समयका लागि मात्र प्रेमभाव राख्नुहुने परमात्मा श्रीकृष्ण हामीहरूद्वारा गरिएका चेष्टाहरूको उपहास गर्दै नगरका सुन्दर नारीहरूको सौभाग्यमा अभिवृद्धि गरिरहनु भएको छैन? ॥१३॥ कसैले भने– के परमात्मा श्रीकृष्णले हामीहरूको अत्यन्त सुमधुर स्वरको स्मरण गर्नुहुन्छ अर्थात् कुनै समयमा हामीलाई पनि सम्झनु हुन्छ? र के उहाँ आफ्नी माताको दर्शन गर्नका लागि फेरि एकपटक गोकुलमा आउनु हुन्छ? ॥१४॥ कुनै गोपिनीले भनिन्– अथवा अब उहाँका विषयमा कुरा गरेर हामीलाई के उपलब्धि हुनसक्छ? त्यसैले अन्य कुराकानी गरौं। हामीहरूलाई परित्याग गरेर उहाँ आनन्दपूर्वक समय बिताइरहनु भएको छ भने उहाँ हाम्रो सामीप्यमा नभएता पनि हामीहरू पनि आनन्दपूर्वक बस्न सक्दछौँ ॥१५॥ हामीहरूले परमात्मा श्रीकृष्णको सामीप्यता प्राप्त गर्नका लागि आफ्ना माता, पिता, दाजु–भाइ, पति एवम् सबै बन्धु–बान्धवहरूको परित्याग गरिदियौँ, तर श्रीकृष्ण त अकृतज्ञ अर्थात् अर्काले लगाएको गुन वा उपकार प्रति आभारी नहुने अथवा बैगुनी रहेछन्। उनले हामीप्रति यस्तै किसिमको व्यवहार देखाए ॥१६॥

तथापि क्वचिदालापमिहागमनसंश्रयम्।

करोति कृष्णो वक्तव्यं भवताराम नानृतम् ॥१७॥

दामोदरोऽसौ गोविन्दः पुरस्त्रीन्यस्तमानसः।

अपेतप्रीतिरस्मासु दुर्दर्शः प्रतिभाति नः ॥१८॥

पराशर उवाच

आमन्त्रितः स कृष्णेति पुनर्दामोदरेति च।

जहसुः सुस्वरं गोप्यो हरिणा हृतचेतसः ॥१९॥

सन्देशः साममधुरैः प्रेमगर्भैरगर्वितैः।

रामेणाश्वसिता गोप्यः कृष्णस्यातिमनोहरैः ॥२०॥

गोपैश्च पूर्ववद् रामः परिहासमनोरमाः।

कथाश्चकार रेमे च सह तैर्व्रजभूमिषु ॥२१॥

कुनैले भनिन्– यस समयमा ती सबै कुराहरूको कुनै अर्थ छैन । तथापि हे बलराम! तपाईं सत्य-सत्य बताउनुहोस्, के श्रीकृष्णले फेरि एकपटक गोकुलमा आउने सम्बन्धमा कुनै कुराकानी गर्नुभएको थियो कि थिएन? ॥१७॥ अन्य कुनै गोपिनीले भनिन्– परमात्मा दामोदर श्रीगोविन्दको मन अब यथार्थ रूपमा नगर निवासी सुन्दर स्त्रीहरू प्रति पूर्ण रूपमा आसक्त भइसकेको छ। त्यसकारण उहाँले हामीलाई प्रेम गर्न छाडिसक्नु भएको छ अर्थात् हामीलाई बिर्सिसक्नु भएको छ। यसैले अब हाम्रा लागि उहाँको दर्शन दुर्लभ बनिसकेको छ अर्थात् हामीले दर्शन पाउने सम्भावना छैन ॥१८॥ **पराशरजीले भन्नुभयो**– त्यसपश्चात् परमात्मा श्रीहरिले जसको अन्तरात्मालाई पूर्ण रूपमा अपहरण गर्नुभएको थियो, ती गोपिनीहरूले बलरामलाई श्रीकृष्ण र श्रीदामोदर भनेर सम्बोधन गर्न थाले तथा त्यसपछि अत्यन्त उच्च स्वरमा हाँस्न थाले अर्थात् अट्टहास गर्न थाले ॥१९॥ त्यसपछि बलरामले परमात्मा श्रीकृष्णको अत्यन्त मनमोहक र शान्तिसम्पन्न, एवं प्रेमले पूर्ण रूपमा भरिएको र घमण्ड नभएको सन्देश सुनाइदिनु भएर गोपिनीहरूलाई सान्त्वना दिनुभयो अर्थात् उनीहरूलाई सन्तुष्ट बनाउने प्रयास गर्नुभयो ॥२०॥ तथा गोपकुमारहरूसँग हाँस-खेल गर्दै बलरामले पहिलाका जसरी नै अत्यन्त मनमोहक कुराकानी गर्नुभयो र उनीहरूसँग मिलेर गोकुलमा अनेकौं किसिमका लीलाहरू पनि गर्नुभयो ॥२१॥

इति श्रीविष्णुमहापुराणे पञ्चमांशे चतुर्विंशोऽध्यायः।



## पञ्चविंशोऽध्यायः

## अध्याय – २५

### "बलभद्रस्य व्रजविहारः यमुनाकर्षणञ्च"

(बलरामद्वारा व्रजको भ्रमण)

पराशर उवाच

वने विचरतस्तस्य सह गोपैर्महात्मनः ।

मानुषच्छद्मरूपस्य शेषस्य धरणीभृतः ॥१॥

निष्पादितोरुकार्यस्य कार्येणोर्वीविचारिणः ।

उपभोगार्थमत्यर्थं वरुणः प्राह वारुणीम् ॥२॥

अभीष्टा सर्वदा यस्य मदिरे त्वं महौजसः ।

अनन्तस्योपभोगाय तस्य गच्छ मुदे शुभे ॥३॥

इत्युक्ता वारुणी तेन सन्निधानमथाकरोत् ।

वृदावनसमुत्पन्नकदम्बतरुकोटरे ॥४॥

विचरन् बलदेवाऽपि मदिरागन्मपुत्तमम् ।

आघ्राय मदिरातर्षमवापाथ पुरातनम् ॥५॥

ततः कदम्बात् सहसा मद्यधारां स लाङ्गली ।

पतन्तीं वीक्ष्य मैत्रेय! प्रययौ परमां मुदम् ॥६॥

पपौ च गोपगोपीभिः समवेतो मुदान्वितः ।

प्रगीयमानो ललितं गीतवाद्यविशारदैः ॥७॥

**पराशरजीले भन्नुभयो–** आफ्ना कार्यहरूका प्रभावले पृथ्वीलाई चलायमान बनाउनुहुने तथा अत्यन्त ठूला–ठूला कार्यहरू पनि सहज किसिमबाट सम्पन्न गर्नुहुने पृथ्वीलाई धारण गर्ने शेषनागले मनुष्यस्वरूपमा अवतार लिनुभएका बलरामलाई वनमा गोपालहरूसँग अत्यन्त आनन्दपूर्वक घुमफिर गरिरहनु भएको देखेर वरुणले उहाँको उपभोगका लागि वारुणी नाम भएको मदिरासँग भने ... ॥१–२॥ हे मदिरे! जुन अत्यन्त पराक्रमशाली अनन्त देवताका लागि तिमी सधैं अत्यन्त प्रिय भएर रहेकी थियौ, हे सौभाग्यवती! तिमी उहाँको उपभोगका लागि तथा उहाँलाई यथार्थ रूपमा प्रसन्न गराउनका लागि यसै समयमा उहाँको सामीप्यमा जाऊ ॥३॥ वरुण देवताले यस प्रकारको आज्ञा दिएपछि ती वारुणी नाम भएकी मदिराले वृन्दावनमा उत्पन्न भएको कदमको रूखको धोध्रो अर्थात् टोड्कोमा निवास गर्न थालिन् ॥४॥ त्यसपछि वृन्दावनको जङ्गलमा अत्यन्त आनन्दपूर्वक घुमफिर गरिरहनु भएका पूर्ण रूपमा फक्रिएर फुलेको कमलको जस्तो मुखारविन्दबाट सम्पन्न हुनुभएका बलरामले वारुणी नाम भएकी मदिराको अत्यन्त उत्तम सुगन्ध आइरहेको थाहा पाउनुभएपछि उहाँमा मदिरा पिउने इच्छा उत्पन्न भयो ॥५॥ त्यसपछि हे मैत्रेय! त्यस समयमा आफ्नो अत्यन्त प्रिय हतियारका रूपमा हलो धारण गर्नुहुने बलराम अनायास रूपमा कदमको रूखको टोड्कोबाट निस्किएको मदिराको धारालाई देखेर अत्यन्त प्रसन्न हुनुभयो ॥६॥ तथा गीत गाउन र बाजा बजाउन अत्यन्त सिपालु गोप र गोपिनीहरूसँगै प्रसन्नतापूर्वक मद्यपान गर्नुभयो अर्थात् मदिरा पिउनुभयो ॥७॥ त्यसपछि प्रचण्ड रूपमा घाम चर्किएका कारणले गर्दा उत्पन्न भएको पसिनाको थोपास्वरूप मोतीहरूबाट पूर्ण रूपमा सुशोभित एवं

स मत्तोऽत्यन्तधर्माम्भः कणिकामौक्तिकोज्ज्वलः ।

आगच्छ यमुने! स्नातुमिच्छामीत्याह विह्वलः ॥८॥

तस्य वाचं नदी सा च मत्तोक्तामवमत्य वै ।

नाजगाम ततः क्रुद्धो हलं जग्राह लाङ्गली ॥९॥

गृहीत्वा तं हलं तेन चकर्ष मदविह्वलः ।

पापे नायासि नायासि गम्यतामिच्छयात्मनः ॥१०॥

साकृष्य तेन सहसा मार्गं सन्त्यज्य निम्नगा ।

यत्रास्ते बलभद्रोऽसौ प्लावयामास तद्वनम् ॥११॥

शरीरिणी तथोत्पत्य त्रासविह्वललोचना ।

प्रसीदेत्यब्रवीद् रामं मुञ्च मां मुसलायुध ॥१२॥

सोऽब्रवीदवजानासि मम शौर्यबले यदि ।

सोऽहं त्वां हलपातेन नयिष्यामि सहस्रधा ॥१३॥

पराशर उवाच

इत्युक्तयातिसन्त्रासात् तथा नद्या प्रसादितः ।

भूभागे प्लाविते तस्मिन् मुमोच यमुनां बलः ॥१४॥

ततः स्नातस्य वै कान्तिराजगाम महात्मनः ।

अवतंसोत्पलं चारु गृहीत्वैकञ्च कुण्डलम ॥१५॥

वरुणप्रहितां चास्मै मालामम्लानपङ्कजाम् ।

समुद्राभे तथा वस्त्रे नीले लक्ष्मीरयच्छत ॥१६॥

मदिरापान गर्नाले उन्मत्त हुनुभएका बलरामले अत्यन्त विह्वल भएर भन्नुभयो– हे यमुना! म नुहाउन चाहन्छु त्यसैले तिमी यहाँ आऊ ॥८॥ त्यस समयमा जब बलरामको कुरालाई मदिराबाट उन्मत्त भएर गरिएको अलाप सम्झिएर यमुना उहाँको सामीप्यमा आइनन्, त्यसपश्चात् बलरामले अत्यन्त क्रोधित भएर आफ्नो शस्त्र हलो उठाउनुभयो ॥९॥ त्यसपछि मदिराबाट पूर्ण रूपमा प्रभावित हुनुभएका बलरामले आफ्नो हलोद्वारा यमुनालाई किनारादेखि नै हलोको टुप्पोले तान्नभयो र भन्न थाल्नुभयो– हे पापिनी! तिमी आउँदिनौ? यस समयमा तिमी आफ्नो इच्छा अनुसार अन्यत्र जाऊ त म पनि हेरौं ॥१०॥ यसरी बलरामद्वारा तानिएपछि यमुनाले आफ्नो पहिलाको मार्गलाई पूर्ण रूपमा परित्याग गरिदिएर बलराम जुन ठाउँमा रहनुभएको थियो, त्यस वनलाई अनायास रूपमा आफ्नो पानीले ढाकिदिइन् ॥११॥ त्यस समयमा यमुना नदी मनुष्यस्वरूप धारण गरेर बलरामका समीप अर्थात् नजिकमा आइन् र अत्यन्त भयभीत भएका कारणले आँखाभरि आँसु भएकी तिनले बलरामसँग भनिन् – 'मुसलधारी! मदेखि प्रसन्न भइदिनुहोस् र मलाई छाडिदिनुहोस् अर्थात् मलाई आफ्नो पुरानै बाटोबाट जाने आज्ञा दिनुहोस् ॥१२॥ उनीद्वारा अत्यन्त सुमधुर वचनहरूद्वारा प्रार्थना गरेको सुनेपछि बलरामले यमुनासँग भन्नुभयो– तिमीले मेरो पराक्रमको अवज्ञा गरेकी छ्यौ, म तिमीलाई यही हलोद्वारा हजारौं टुक्रा बनाइदिन्छु ॥१३॥ **पराशरजीले भन्नुभयो–** बलरामद्वारा यसो भनिएपछि अत्यन्त भयभीत भएकी यमुना त्यस जमिनमा वहन थालिन्, त्यसपछि यसरी वहेको देखेर प्रसन्न हुनुभएका बलरामले उनलाई छाडिदिनुभयो ॥१४॥ त्यस समयमा यमुनाको पानीमा नुहाएर महात्मा बलराम अत्यन्त सुशोभित हुनुभएको थियो। त्यसपछि लक्ष्मीजीले स्वयं सशरीर प्रकट भएर उहाँलाई एउटा अत्यन्त सुन्दर कर्णभूषण अर्थात् कानमा लगाउने फूल, एउटा कुण्डल, वरुणले पठाउनु भएको एउटा कहिल्यै नबिग्रने अर्थात् न कुहिने कमलको फूलको माला र समुद्रको जस्तै अत्यन्त शोभासम्पन्न दुइटा नीलो रङ्गका कपडा दिनुभयो ॥१५–१६॥ यसरी

कृतावतंसः स तदा चारुकुण्डलभूषितः ।

नीलाम्बरधरः स्रग्वी शुशुभे कान्तिसंयुतः ॥१७॥

इत्थं विभूषितो रेमे तत्र रामस्तथा व्रजे ।

मासद्वयेन यातश्च पुनः स द्वारकां पुरीम् ॥१८॥

रेवतीं नाम तनयां रैवतस्य महीपतेः ।

उपयेमे बलस्तस्यां जज्ञाते निशठोल्मुकौ ॥१९॥

प्राप्त भएका कानमा लगाउने फूल, अत्यन्त सुन्दर कुण्डल, नीलो रङ्ग भएको कपडा र कमलको फूलको माला लगाउनु भएपछि, बलराम त्यस समयमा अत्यन्त कान्तिसम्पन्न भएर सुशोभित हुन थाल्नुभयो ॥१७॥यस किसिमले विभूषित भएर बलरामले गोकुलमा अनेकौं किसिमका लीलाहरू गर्नुभयो तथा दुई महिनासम्म गोकुलमा बसेर फेरि द्वारकामा आउनुभयो ॥१८॥ गोकुलबाट फर्किएर आउनुभएपछि अत्यन्त पराक्रमी बलरामले रैवत राजाकी छोरी रेवतीसँग विवाह गर्नुभयो । बलरामका पुत्ररत्नका रूपमा रेवतीका गर्भबाट निशठ र उल्मुक नाम भएका दुई पुत्रहरू उत्पन्न भए ॥१९॥

इति श्रीविष्णुमहापुराणे पञ्चमांशे पञ्चविंशोऽध्यायः ।



## षड्विंशोऽध्यायः

## अध्याय – २६

### "रुक्मिणीहरणम्"

(रुक्मिणीको अपहरण)

पराशर उवाच

भीष्मकः कुण्डिने राजा विदर्भविषयेऽभवत् ।
रुक्मी तस्याभवत् पुत्रो रुक्मिणी च वरानना ॥१॥
रुक्मिणीं चकमे कृष्णः सा च तं चारुहासिनी ।
न ददौ याचते चैनां रुक्मी द्वेषेण चक्रिणे ॥२॥
ददौ च शिशुपालाय जरासन्धप्रचोदितः ।
भीष्मको रुक्मिणा सार्द्धं रुक्मिणीमुरुविक्रमः ॥३॥
विवाहार्थं ततः सर्वे जरासन्धमुखा नृपाः ।
भीष्मकस्य पुरं जग्मुः शिशुपालप्रियैषिणः ॥४॥
कृष्णोऽपि बलभद्राद्यैर्यादवैर्बहुभिर्वृतः ।
प्रययौ कुण्डिनं द्रष्टुं विवाहञ्चैव भूभृतः ॥५॥
श्वोभाविनि विवाहे तु तां कन्यां हृतवान् हरिः ।
विपक्षभारमासज्य रामादिष्वथ बन्धुषु ॥६॥
ततश्च पौण्ड्रकः श्रीमान् दन्तवक्रो विदूरथः ।
शिशुपाल–जरासन्ध–शाल्वाद्याश्च महीभृतः ॥७॥
कुपितास्ते हरिं हन्तुं चक्रुरुद्योगमुत्तमम् ।
निर्जिताश्च समागम्य रामाद्यैर्यदुपुङ्गवैः ॥८॥

**पराशरजीले भन्नुभयो–** विदर्भ देशको कुण्डिनपुर नाम भएको नगरमा भीष्मक नाम भएका एक राजाले निवास गरेका थिए। उनका रुक्मी नाम भएका एक छोरा र रुक्मिणी नाम भएकी अत्यन्त सुन्दरी एक छोरी थिए ॥१॥ परमात्मा श्रीकृष्णले रुक्मिणीलाई प्राप्त गर्ने अभिलाषा राख्नुभएको थियो भने रुक्मिणीले पनि परमात्मा श्रीकृष्णलाई प्राप्त गर्ने कामना गरेकी थिइन्। तर परमात्मा श्रीकृष्णले माग्नु भए तापनि उहाँसँग द्वेषभाव रहेका कारणले गर्दा दिएनन् ॥२॥ अत्यन्त पराक्रमी राजा भीष्मकले जरासन्धको सल्लाह अनुसार रुक्मीसँग सहमत भएर शिशुपालसँग रुक्मिणीको विवाह गरिदिने निश्चय गरे ॥३॥ त्यसपछि शिशुपालका अनन्य मित्रहरू जरासन्ध आदि सबै राजाहरू शिशुपाल र रुक्मिणीको वैवाहिक कार्यक्रममा सहभागी हुनका लागि भीष्मकको नगरमा गए ॥४॥ परमात्मा श्रीकृष्ण पनि बलराम आदि यादवहरूलाई साथमा लिएर चेदिश देशका राजा शिशुपाल र कुण्डिनगरकी कन्या रुक्मिणीको विवाहोत्सव हेर्नका लागि कुण्डिनगरमा पुग्नुभयो ॥५॥ त्यसपछि विवाह हुनुभन्दा एक दिन पहिले नै परमात्मा श्रीहरिले आफ्ना विपक्षीहरू अर्थात् शत्रुहरूलाई नियन्त्रणमा गर्ने वा सम्हाल्ने दायित्व बलराम र अन्य बन्धुहरूमा छाडीदिनुभएर ती कन्याहरूलाई अर्थात् रुक्मिणीलाई अपहरण गर्नुभयो ॥६॥ त्यसपछि पौण्ड्रक, दन्तवक्र, विदूरथ, शिशुपाल, जरासन्ध र शाल्व जस्ता राजाहरूले अत्यन्त क्रोधित भएर परमात्मा श्रीकृष्णको हत्या गर्ने अत्यन्त ठूलो प्रयास गरिरहेका थिए। तर तिनीहरू सबै अत्यन्त पराक्रमी बलराम र यदुवंशीहरूसँगको युद्धमा नै पराजित भए ॥७–८॥

कुण्डिनं न प्रवेक्ष्यामि अहत्वा युधि केशवम्।
कृत्वा प्रतिज्ञां रुक्मी च हन्तुं कृष्णमभिद्रुतः ॥९॥
हत्वा बलं सनागाश्वं पत्ति–स्यन्दनसङ्कुलम्।
निर्जितः पातितश्चोर्व्यां लीलयैव स चक्रिणा ॥१०॥
हन्तुं कृतमतिः कृष्णो रुक्मिणं युद्धदुर्मदम्।
प्रणम्य याचितो ब्रह्मन् रुक्मिण्या भगवान् हरिः ॥११॥
एक एव मम भ्राता न हन्तव्यस्त्वयाधुना।
कोपं नियम्य देवेश! भ्रातृभिक्षा प्रदीयताम् ॥१२॥
इत्युक्तेन परित्यक्तः कृष्णेनाक्लिष्टकर्मणा।
रुक्मी भोजकटं नाम पुरं कृत्वावसत् तदा ॥१३॥
निर्जित्य रुक्मिणं सम्यगुपयेमे स रुक्मिणीम्।
राक्षसेन विवाहेन सम्प्राप्तां मधुसूदनः ॥१४॥
तस्यां जज्ञेऽथ प्रद्युम्नो मदनांशः स वीर्यवान्।
जहार शम्बरो यं वै यो जघान च शम्बरम् ॥१५॥

त्यसपछि "युद्ध गरेर श्रीकेशवलाई नमारेसम्म म फेरि फर्किएर कुण्डिनगरमा कुनै पनि अवस्थामा जान्न" यस प्रकारको प्रतिज्ञा गरेर रुक्मीले परमात्मा श्रीकृष्णको पीछा गर्न थाले ॥९॥ तर परमात्मा श्रीकृष्णले हात्ती, घोडा, रथ र पैदल सेनाबाट सम्पन्न उसको सबै सैन्य नष्ट गरिदिनुभएर रुक्मीमाथि विजय प्राप्त गर्नुभयो र उसलाई जमिनमा लडाइदिनुभयो ॥१०॥ हे ब्राह्मण! त्यसपश्चात् जब परमात्मा श्रीहरिले युद्ध गर्नका लागि अत्यन्त उत्साहित भएर आफूमाथि आइलागेको रुक्मीको वध (हत्या) गर्ने विचार गर्नुभयो, त्यस समयमा रुक्मिणीले अत्यन्त आदरपूर्वक प्रणाम गर्दै भगवान्सँग प्रार्थना गरिन् ॥११॥ हे देवेश्वर ! मेरो एक मात्र भाइ भएकाले यिनलाई नमारिदिनुहोस् तथा आफूमा उत्पन्न भएको क्रोधाग्निलाई रोक्नुहोस् र मलाई मेरो भाइ भिक्षाका रूपमा दिनुहोस् ॥१२॥ जब परमात्मा श्रीकृष्णसँग रुक्मिणीले यसरी प्रार्थना गरिन्, तब उहाँले रुक्मीलाई जीवनदान दिनुभयो र उसलाई छाडीदिनुभयो । त्यस समयमा आफ्नो प्रतिज्ञा पूर्ण नभएकोले रुक्मी भोजकट नाम भएको नगर निर्माण गरेर त्यहीँ बस्न थाले ॥१३॥ यसरी परमात्मा श्रीमधुसूदनले रुक्मीलाई युद्धमा पराजित गरेर राक्षस–विवाहबाट प्राप्त भएकी रुक्मिणीसँग वेदोक्त विधि अनुसार विवाह गर्नुभयो ॥१४॥ तिनै रुक्मिणीको गर्भबाट कामदेवको अंश भएका अत्यन्त पराक्रमी प्रद्युम्नको जन्म भयो; जसलाई जन्मदाकै समयमा नै शम्बरासुरले अपहरण गऱ्यो र फेरि कालक्रम अनुसार तिनै प्रद्युम्नले शम्बरासुरको वध गरे ॥१५॥

इति श्रीविष्णुमहापुराणे पञ्चमांशे षड्विंशोऽध्यायः।

ॐ

## सप्तविंशोऽध्यायः

## अध्याय – २७

### "प्रद्युम्नहरणं शम्बरवधश्च"

(प्रद्युम्नको अपहरण तथा शम्बरासुरको वध)

**मैत्रे उवाच**

**शम्बरेण हतो वीरः प्रद्युम्नः स कथं मुने।**

**शम्बरश्च महावीर्यः प्रद्युम्नेन कथं हतः ॥१॥**

**पराशर उवाच**

**षष्ठेऽह्नि जातमात्रन्तु प्रद्युम्नं सूक्तिकागृहात्।**

**ममैष हन्तेती मुने! हतवान् कालशम्बर ॥२॥**

**हत्वा चिक्षेप चैनैव ग्राहोग्रे लवणार्णवे।**

**कल्लोलजनितावर्ते सुघोरे मकरालये ॥३॥**

**पतितं तत्र चैवैको मत्स्यो जग्राह बालकम्।**

**न ममार च तस्यापि जठराग्निप्रदीपितः ॥४॥**

**मत्स्यबन्धैश्च मत्स्योऽसौ मत्स्यैरन्यैः सह द्विज।**

**घातितोऽसुरवर्याय शम्बराय निवेदितः ॥५॥**

**तस्य मायावती नाम पत्नी सर्वगृहेश्वरी।**

**कारयामास सूदानामाधिपत्यमनिन्दिता ॥६॥**

**मैत्रेयले भने**– हे मुनिश्रेष्ठ! अत्यन्त शक्तिशाली प्रद्युम्नलाई शम्बरासुरले कसरी अपहरण गऱ्यो र तिनै अपहरणमा परेका प्रद्युम्न महाबलशाली शम्बरासुरको वध अर्थात् हत्या गर्न कसरी सफल भए? ॥१॥ पराशरजीले भन्नुभयो– हे मुनि! कालका बराबर अत्यन्त भयानक र विकराल शम्बरासुरले प्रद्युम्नलाई जन्मिएको छैटौं दिनमा नै "यो बालकले निश्चित रूपमा मलाई मार्नेछ" यस्तो विचार गरेर प्रसूतिगृह अर्थात् सुत्केरी बस्ने घरबाट नै अपहरण गरेको थियो ॥२॥ तथा उनलाई अपहरण गरिसकेपछि शम्बरासुरले छालैछालले भरिएको बीच भागलाई केन्द्र मानेर त्यसको चारैतिर घुमिरहेको पानी वा भुँवरीबाट सम्पन्न र अत्यन्त भयानक गोही जस्ता जलचरहरूबाट सम्पन्न भएको लवण समुद्र अर्थात् नुनको समुद्रमा फ्याँकिदियो ॥३॥ त्यसरी समुद्रमा फ्याँकिएका ती बालक प्रद्युम्नलाई एउटा माछाले निल्यो तर त्यो माछाको जठराग्निबाट जलेर पनि ती बालकको मृत्यु भएन अर्थात् उनी माछाको पेटमा सकुशल जीवितावस्थामा नै रहे ॥४॥ हे ब्राह्मणश्रेष्ठ! केही दिनपछि माछा मारेर जीवन निर्वाह गर्नेहरूले अर्थात् माझीहरूले अन्य माछाहरूसँगै त्यो माछालाई पनि आफ्नो जालमा पारेर अर्थात् फँसाएर असुरश्रेष्ठलाई उपहारस्वरूप त्यो माछा दिए ॥५॥ मायावती नाम भएकी एक स्त्री जुन शम्बरासुरकी पत्नीका रूपमा रहेकी थिइन्। उनले त्यो घरमा पूर्ण रूपमा आफ्नो आधिपत्य कायम गरेकी थिइन् र ती सुलक्षणाले भान्सालाई पनि आफ्नो नियन्त्रणमा राखेकी थिइन् अर्थात् त्यस घरमा उनको अनुमति नपाएसम्म कसैले केही गर्न सक्दैनथ्यो ॥६॥ त्यसपछि त्यो माछाको पेट चिरेपछि त्यसमा मायवतीले एउटा अत्यन्त सुन्दर

दारिते मत्स्यजठरे सा ददर्शातिशोभनम्।

कुमारं मन्मथतरोर्दग्धस्य प्रथमाङ्कुरम्॥७॥

कोऽयं कथमयं मत्स्यजठरं समुपागतः।

इत्येवं कौतुकाविष्टां तां तन्वीं प्राह नारदः ॥८॥

अयं समस्तजगतः स्थितिसंहारकारिण।

शम्बरेण हतोः विष्णोस्तनयः सूतिकागृहात्॥९॥

क्षिप्तः समुद्रे मत्स्येन निगीर्णस्ते वशं गतः।

नररत्नमिदं सुभ्रु विस्रब्धा परिपालय ॥१०॥

पराशर उवाच

नारदेनैवमुक्ता सा पालयामास तं शिशुम्।

बाल्यादेवातिरागेण रूपातिशयमोहिता ॥११॥

स यदा यौवनाभोग–भूषितोऽभून्महामते।

साभिलाषा तदा सायि बभूव गजगामिनी ॥१२॥

मायावती ददौ तस्मै मायाः सर्वा महामुने।

प्रद्युम्नायातिरागान्धा तन्यस्तहृदयेक्षणा ॥१३॥

प्रसज्जन्तीन्तु तामाह स कार्ष्णिः कमलेक्षणाम्।

मातृभावमपाहाय किमेवं वर्तसेऽन्यथा ॥१४

बालक रहेको देखिन् जुन जलेर भस्म भएको कामदेवरूपी रूखको पहिलो अङ्कुर अर्थात् टुसो थिए ॥७॥ त्यसपछि यो के हो र यो बालक कस्ता किसिमले यस माछाको पेटमा प्रवेश गर्‍यो? यस प्रकार अत्यन्त आश्चर्यचकित भएकी ती कृशाङ्गी अर्थात् भिनो कमर भएकी एवं अत्यन्त सुन्दरी मायवतीका नजिकमा आएर देवर्षि नारदले भने... ॥८॥ हे सुन्दर भृकुटी अर्थात् आँखिभौँ भएकी सुन्दरी! यी बालक सम्पूर्ण जगत्को स्थिति र संहार गर्नुहुने परमात्मा श्रीकृष्णका पुत्र हुन् र यिनलाई प्रसूतिगृह अर्थात् सुत्केरी राखिएको घरबाट शम्बरासुरले अपहरण गरेको थियो। यसरी अपहरण गरेपछि उसले यिनलाई समुद्रमा फ्याँकिदियो। त्यसपछि एउटा माछाले यिनलाई निल्यो। यसप्रकार यिनले माछाको पेटमा निवास गरेका हुन्। यस समयमा यी बालक तिम्रो आधिपत्यमा रहेका छन्। त्यसकारण तिमीले यी बालकको अर्थात् मानवरत्नको अत्यन्त विश्वासका साथ पालन–पोषण गर ॥९–१०॥ **पराशरजीले भन्नुभयो–** नारदले यसरी स्पष्ट गरिदिएपछि ती बालकको अत्यन्त सुन्दर एवं मनै लोभ्याउने किसिमको अनुहार देखेर पूर्ण रूपमा मोहित भएर बाल्यावस्थादेखि नै अत्यन्त प्रेमपूर्वक ती बालकको पालन–पोषण गर्न थालिन् ॥११॥ हे बुद्धिमान ब्राह्मण! जुन समयमा प्रद्युम्न नवयौवनको समागमबाट यथार्थ रूपमा विभूषित भए, त्यसपछि हात्तीको जस्तो हिँडाइ भएकी मायावतीले उनीप्रति अत्यन्त कामुक भएर आफ्नो अन्तरात्मा रहेको प्रेमभाव देखाउन थालिन् अर्थात् प्रद्युम्नप्रति अत्यन्त आसक्त भइन् ॥१२॥ हे मुनिश्रेष्ठ! त्यस समयमा जसले आफ्ना अन्तरात्मा र आँखा पूर्ण रूपमा प्रद्युम्नमा समर्पण गरिसकेकी थिइन्, ती मायावतीले प्रेमको जालमा फँसेर अन्धी भएका कारणले गर्दा आफूसँग भएको सबै किसिमको मायाविद्या अर्थात् मायाको रूपमा रहने विद्या उनलाई सिकाइदिइन् ॥१३॥ त्यसपछि परमात्मा श्रीकृष्णका पुत्ररत्न प्रद्युम्नले ती कमलका जस्ता आँखा भएकी मायावतीलाई अत्यन्त कामुकभाव प्रदर्शन गर्दै आफूसँग समागम अर्थात् सम्भोग गर्नका लागि सजिएर अर्थात् तयार भएर बसिरहेकी देखेर भने तपाईंले मातृभाव अर्थात् आमापनको त्याग गरेर यो अन्य किसिमको भाव किन देखाइरहनु भएको छ? ॥१४॥

सा चास्मै कथयामास न पुत्रस्त्वं ममेति वै।

तनयं त्वामयं विष्णोर्हृतवान् कालशम्बरः ॥१५॥

क्षिप्तः समुद्रे मत्स्यस्य सम्प्राप्तो जठरान्मया।

सा तु रोदिति ते माता कान्ताद्याप्यतिवत्सला ॥१६॥

पराशर उवाच

इत्युक्तः शम्बरं युद्धे प्रद्युम्नः स समाह्वयत्।

क्रोधाकुलीकृतमना युयुधे च महाबलः ॥१७॥

हत्वा सैन्यमशेषन्तु तस्य दैत्यस्य माधविः।

सप्त माया व्यतिक्रम्य मायां प्रयुयुजेऽष्टमीम् ॥१८॥

तया जघान तं दैत्यं मायया कालशम्बरम्।

उत्पत्य च तया सार्द्धमाजगाम पितुर्गृहम् ॥१९॥

अन्तःपुरे निपतितं मायावत्या समन्वितम्।

तं दृष्ट्वा कृष्णसङ्कल्पा वभूवुः कृष्णयोषितः ॥२०॥

रुक्मिणी चावदत् प्रेम्णा साश्रुदृष्टिरनिन्दिता।

धन्यायाः खल्वयं पुत्रो वर्तते नवयौवने ॥२१॥

त्यस समयमा प्रद्युम्नको यौवनप्रति अत्यन्त आसक्त भएकी मायावतीले उनीसँग भनिन् – तपाईं यथार्थमा मेरो पुत्र नभएर परमात्मा श्रीकृष्णको पुत्ररत्न हुनुहुन्छ, तपाईंलाई तपाईंको कालस्वरूप शम्बरासुरले जन्मने बित्तिकै अपहरण गरेर समुद्रमा फ्याँकिदिएको थियो। तर त्यहाँ तपाईंलाई एउटा माछाले निले पनि त्यसको जठराग्निले जलाउन सकेन। त्यसपछि माझीहरूद्वारा जालमा परेर त्यो माछो उपहारस्वरूप मेरो घरमा आयो र मैले हजुरलाई त्यही माछाको पेटमा भेट्टाएकी हुँ अर्थात् माछाको पेटबाट प्राप्त गरेकी हुँ। हे प्रिय! तपाईंको पुत्रको प्रेमबाट सम्पन्न भएकी माता आजसम्म पनि रोइरहेकी होलिन् अर्थात् पुत्रको वियोगमा आँखाबाट झरेका आँसु अझै सुक्न सकेका छैनन् होला ॥१५-१६॥ **पराशरजीले भन्नुभयो**– मायावतीले यस प्रकारले बताइदिएपछि अत्यन्त बलशाली प्रद्युम्नले क्रोधबाट पूर्ण रूपमा व्याकुल भएर शम्बरासुरलाई युद्ध गर्ने चुनौती दिनुभयो र त्यो अत्यन्त दुष्ट स्वभाव भएको असुरसँग युद्ध गर्न थाल्नुभयो ॥१७॥यदुवंशमा उत्पन्न हुनुभएका अत्यन्त पराक्रमी प्रद्युम्नले त्यस दैत्य शम्बरासुरको सबै सेनालाई पूर्ण रूपमा नष्ट गरिदिनुभयो। त्यसपछि उसँग भएको सातौ मायाहरूमाथि अत्यन्त सहज रूपमा विजय हासिल गरेर आठौं मायाको प्रयोग गर्नुभयो ॥१८॥ त्यो आठौं मायाको प्रयोग गरेर अर्थात् त्यसबाट प्रद्युम्नले त्यो दैत्यराज कालशम्बरलाई मारिदिनुभयो र मायावतीलाई आफैँसँग लिएर विमानमा उडेर आकाशमार्गको प्रयोग गर्दै आफ्ना पिताश्रीका घरमा आउनुभयो अर्थात् आफ्नो घरमा आइपुग्नुभयो ॥१९॥ यसपछि मायावतीसहित आफ्नो महलमा आएका प्रद्युम्नलाई देखेपछि परमात्मा श्रीकृष्णका रानीहरूले परमात्मा श्रीकृष्ण नै आउनुभएको हो भन्ने सम्झिए॥२०॥ तर अनिन्दिता अर्थात् निर्दोष रुक्मिणी अत्यन्त प्रेमभावमा आँखाभरि आँसु पार्दै भन्न थालिन्– "ओहो! कुनै भाग्यवती अर्थात् भाग्यमानी स्त्रीको पुत्रले नवयौवन प्राप्त गरिसकेको रहेछ अर्थात् ताजा जवानी प्राप्त गरेको छ।" ॥२१॥ यदि मेरा पुत्र प्रद्युम्न पनि

अस्मिन् वयसि पुत्रो मे प्रद्युम्नो यदि जीवति।

सभाग्या जननी वत्स! त्वया कापि विभूषिता ॥२२॥

अथवा यादृशः स्नेहो मम यादृग् वपुस्तव।

हरेरपत्यं सुव्यक्तं भवान् वत्स! भविष्यति ॥२३॥

पराशर उवाच

एतस्मिन्नन्तरे प्राप्तः सह कृष्णेन नारदः।

अन्तः पुरचरीं देवीं रुक्मिणीं प्राह हर्षयन् ॥२४॥

एष ते तनयः सुभ्रु! हत्वा शम्बरमागतः।

हृतो येनाभवद् बालो भवत्याः सूतिकागृहात् ॥२५॥

इयं मायावती भार्या तनयस्यास्य ते सती।

शम्बरस्यन न भार्येयं श्रूयतामत्र कारणम् ॥२६॥

मन्मथे तु गते नाशं तदुद्भवपरायणा।

शम्बरं मोहमायास मायारूपेण रूपिणी ॥२७॥

व्यवायाद्युपभोगेषु रूपं मायामयं शुभम्।

दर्शयामास दैत्यस्य तस्येयं मदिरेक्षणा ॥२८॥

कामोऽवतीर्णः पुत्रस्ते तस्येयं दयिता रतिः।

विशङ्का नात्र कर्तव्या स्नुषेयं तव शोभना ॥२९॥

जीवित रहेका थिए भने उनको आयु पनि यति नै हुने थियो अर्थात् उनी पनि नवयौवन हुने थिए। हे पुत्र! तिमी सत्य बताऊ, तिमीले कुन अत्यन्त भाग्यमानी माताका कोखबाट जन्म लिएका हौ? ॥२२॥ अथवा हे पुत्र! जसरी ममा तिमीप्रति अत्यन्त प्रेमभाव बढिरहेको छ र तिम्रो स्वरूप जस्तो किसिमको रहेको छ। त्यसबाट मलाई तिमी परमात्मा श्रीकृष्णकै पुत्ररत्न भएको अनुभूति भइरहेको छ अर्थात् मेरो मान्यता अनुसार निश्चित रूपमा परमात्मा श्रीकृष्णकै पुत्र हुनुपर्दछ ॥२३॥ **पराशरजीले भन्नुभयो**– त्यसै समयमा परमात्मा श्रीकृष्णसँग नारद त्यहाँ आए। उनले अत्यन्त सुन्दर महलमा निवास गर्नुहुने देवी रुक्मिणीलाई अत्यन्त आनन्दित बनाउने समाचार सुनाउँदै भन्न थाले ... ॥२४॥ हे भाग्यवती देवी! यी तपाईंका अत्यन्त पराक्रमी पुत्र प्रद्युम्न अत्यन्त दुष्ट दैत्य शम्बरासुरलाई मारेर आएका छन्। शम्बरासुरले यिनलाई बाल्यावस्थामा नै सुत्केरी घरबाट अपहरण गरेर लगेको थियो र समुद्रमा फ्याँकिदिएको थियो। यी तिनै प्रद्युम्न हुन् ॥२५॥ तथा यी परम सुन्दरी तपाईंका यी पुत्र प्रद्युम्नकी पतिव्रता पत्नी मायावती हुन्। यिनी शम्बरासुरकी पत्नी होइनन्। यसको कारणका विषयमा म तपाईंलाई बताउनेछु, सुन्नुहोस् ॥२६॥ प्राचीनकालमा कामदेव पूर्ण रूपमा भस्म भइसकेपछि फेरि कामदेवको जन्मको प्रतीक्षा गरिरहेकी परम सुन्दरी रतिले मायाको स्वरूप धारण गरेर त्यो अत्यन्त दुष्ट एवं दुराचारी दैत्यराज शम्बरासुरलाई पूर्ण रूपमा मोहित बनाएर राखेकी थिइन् ॥२७॥ यी अत्यन्त कामुक आँखा भएकी मायवतीले त्यो दैत्यराज शम्बरासुरको घुमफिर एवम् शयनजस्ता भोगविलासको उपभोगका समयमा आफ्नो अत्यन्त सुन्दर मायामय स्वरूपलाई उसका अगाडि प्रस्तुत गरिदिने गरेकी थिइन् ॥२८॥ हे देवी! तिनै कामदेवले तपाईंको पुत्रका रूपमा जन्म लिएका हुन् र यी मायावती उनैकी अत्यन्त प्रिय पत्नी रति हुन्। हे सौभाग्यवती! यसमा कुनै किसिमको सन्देह नगर्नुहोला, यिनी तपाईंकी पुत्रवधू अर्थात् बुहारी हुन् ॥२९॥ त्यसपछि

ततो हर्षसमाविष्टा रुक्मिणी केशवस्तथा।

नगरी च समस्ता सा साधु साध्वित्यभाषत ॥३०॥

चिरं नष्टेन पुत्रेण संयुक्तां प्रेक्ष्य रुक्मिणीम्।

अवाप विस्मयं सर्वो द्वारवत्यां जनस्तदा ॥३१॥

देवी रुक्मिणी र परमात्मा श्रीकृष्ण अत्यन्त प्रसन्न हुनुभयो तथा नगरका सबै बासिन्दाहरू "धन्यवाद-धन्यवाद" भन्दै हर्ष व्यक्त गर्न थाले ॥३०॥ त्यस समयमा लामो समयदेखि हराइरहेका पुत्रसँग देवी रुक्मिणीको मिलन भएको देखेपछि द्वारकापुरीमा निवास गर्ने सबै मनुष्यहरू अत्यन्त आश्चर्यचकित भए ॥३१॥

इति श्रीविष्णुमहापुराणे पञ्चमांशे सप्तविंशोऽध्यायः।



## अष्टाविंशोऽध्यायः

## अध्याय – २८

### "रुक्मिवध"

(रुक्मीको हत्या)

पराशर उवाच

चारुदेष्णं सुदेष्णञ्च चारुदेहञ्च वीर्यवान्।
सुषेणं चारुगुप्तञ्च भद्रचारुं तथापरम् ॥१॥
चारुविन्दं सुचारुञ्च चारुञ्च बलिनां वरम्।
रुक्मिण्यजनयत् पुत्रान् कन्यां चारुमतीं तथा ॥२॥
अन्याश्च भार्याः कृष्णस्य बभूवुः सप्त शोभनाः।
कालिन्दी मित्रविन्दा च सत्या नाग्नजिती तथा ॥३॥
देवी जाम्बवती चापि रोहिणी कामरूपिणी।
मद्रराजसुता चान्या सुशीला शीलमण्डना ॥४॥
सात्राजिती सत्यभामा लक्ष्मणा चारुहासिनी।
षोडशासन् सहस्राणि स्त्रीणामन्यानि चक्रिणः ॥५॥
प्रद्युम्नोऽपि महावीर्यो रुक्मिणस्तनयां शुभाम्।
स्वयंवरस्थां जग्राह सा च तं तनयं हरेः ॥६॥
तस्यामस्याभवत् पुत्रो महाबलपराक्रमः।
अनिरुद्धो रणेऽरुद्धो वीर्योदधिरन्दिमः ॥७॥
तस्यापि रुक्मिणः पौत्रीं वरयामास केशवः।
दौहित्राय ददौ रुक्मी तां स्पर्द्धन्नपि शौरिणा ॥८॥
तस्या विवाहे रामाद्या यादवा हरिणा सह।
रुक्मिणो नगरं जग्मुर्नाम्ना भोजकटं द्विज ॥९॥

**पराशरजीले भन्नुभयो–** रुक्मिणीका गर्भबाट चारुमती नाम भएकी एक कन्या र प्रद्युम्न बाहेक चारुदेष्ण, सुदेष्ण, वीर्यवान्, चारुदेह, सुषेण, चारुगुप्त, भद्रचारु, चारुविद् सुचारु र चारु नाम भएका नौ पुत्रहरू जन्मिएका थिए तथा यी सबै अत्यन्त पराक्रमी र बलवानहरूमा सर्वोत्कृष्ट थिए ॥१-२॥ रुक्मिणी बाहेक परमात्मा श्रीकृष्णका सातोटी स्त्रीहरू थिए। तिनीहरूको नाम कालिन्दी, मित्रविन्दा, नग्नजितकी पुत्री सत्या, जाम्बवान्की पुत्री अश्वगन्धा रोहिणी, अत्यन्त शीलस्वभावकी स्वामिनी सुशीला, भद्रा, सत्राजितकी पुत्री सत्यभामा र राम्रो देखिने गरी हाँस्ने लक्ष्मणा थियो। यिनीहरू सबै अत्यन्त सुन्दरी स्त्रीहरू थिए तथा यी सबै पत्नीहरूबाहेक परमात्मा श्रीकृष्णका अरु सोन्ह हजार पत्नीहरू पनि थिए ॥३-५॥अत्यन्त पराक्रमी प्रद्युम्नले रुक्मीकी अत्यन्त सुन्दरी कन्यासँग स्वयम्बरमा विवाह गरेका थिए। ती परम सुन्दरी कन्या पनि प्रद्युम्नको प्रेममा अत्यन्त आसक्त भएकी थिइन्॥६॥ ती कन्याका गर्भबाट प्रद्युम्नका अत्यन्त बलशाली एवं पराक्रमी अनिरुद्ध नाम भएका पुत्र जन्मिए। उनी असीमित शक्तिबाट सम्पन्न र युद्धमा आफ्ना शत्रुहरूलाई दमन गर्न सक्ने सामर्थ्य भएका थिए॥७॥ परमात्मा श्रीकृष्णले ती अनिरुद्धका लागि रुक्मिकी नातिनी प्राप्तिका लागि अनुरोध गर्नुभएको थियो र परमात्मा श्रीकृष्णसँग ईर्ष्या एवम् द्वेषभाव राखेको भएता पनि रुक्मीले आफ्नी छोरीको छोरालाई आफ्नी नातिनी दिन स्वीकार गरे अर्थात् उनीहरूको विवाहका लागि स्वीकृति दिए ॥८॥ त्यसपछि हे ब्राह्मणश्रेष्ठ! ती कन्याको विवाहमा सहभागी हुनका लागि परमात्मा श्रीहरिका साथमा अत्यन्त पराक्रमी बलराम लगायतका सबै यादवहरू पनि भोजकट नाम भएको राजा रुक्मीको राजधानीमा गए॥९॥ त्यसपछि अत्यन्त

विवाहे तत्र निर्वृत्ते प्राद्युम्नेस्तु महात्मनः ।

कलिङ्गराजप्रमुखा रुक्मिणं वाक्यमब्रुवन् ॥१०॥

अनक्षज्ञो हली द्यूते तथास्य व्यसनं महत् ।

न जयामो बलं कस्माद द्यूते नैनं महाद्युते? ॥११॥

पराशर उवाच

तथेति तानाह नृपान् रुक्मी बलसमन्वितः ।

सभायां सह रामेण चक्रे द्यूतञ्च वै तदा ॥१२॥

सहस्रमेकं निष्काणां रुक्मिणा विजितो बलः ।

द्वितीयेऽपि पणे चान्यत् सहस्रं रुक्मिणा जितम् ॥१३॥

ततो दश सहस्राणि निष्काणां पणमाददे ।

बलभद्रोऽजयत्तानि रुक्मी द्यूतविदां वरः ॥१४॥

ततो जहास स्वनवत् कलिङ्गाधिपतिर्द्विज ।

दन्तान् विदर्शयन् मूढो रुक्मी चाह मदोद्धतः ॥१५॥

अविज्ञोऽयं मया द्यूते बलदेवः पराजितः ।

मुधैवाक्षावलेपान्धो यः स्वं मेनेऽक्षकोविदम् ॥१६॥

दृष्ट्वा कलिङ्गराजं तं प्रकाशदशनाननम् ।

रुक्मिणश्चापि दुर्वाक्यं कोपं चक्रे हलायुधः ॥१७॥

ततः कोपपरीतात्मा निष्ककोटिं हलायुधः ।

ग्लहं जग्राह रुक्मी च तदर्थेऽक्षानपातयत् ॥१८॥

शक्तिशाली प्रद्युम्नका पुत्र अनिरुद्धको वैवाहिक कार्यक्रम सम्पन्न भइसकेपछि कलिङ्गराज आदि राजाहरूले रुक्मीसँग भने ...॥१०॥ यी बलराम जुवाका विषयमा पूर्ण रूपमा अनभिज्ञ रहेका छन् तर पनि यिनी जुँवामा अत्यन्त आसक्त हुन्छन् अर्थात् जुवा खेल्न साह्रै मन पराउँछन्। त्यसकारण हे तेजस्वी! हामीले अत्यन्त पराक्रमी बलरामलाई जुवामा किन पराजित नगराउने? ॥११॥ **पराशरजीले भन्नुभयो**– त्यसपछि आफूमा भएको बलको घमण्डले गर्दा अत्यन्त उन्मत्त भएका रुक्मीले अन्य राजाहरूसँग "यही ठीक हुन्छ" भनेर सभामा बलरामसँग उनले जुवा खेल्न आरम्भ गरे अर्थात् राजा रुक्मी र अत्यन्त पराक्रमी बलराम जुवा खेल्न थाले ॥१२॥ राजा रुक्मीले पहिलो चरणमा नै एक सहस्र निष्कद्वारा अर्थान् चार हजार सुवर्णको दाउमा बलरामलाई पराजित गरे फेरि अर्को दाउमा पनि एक सहस्र निष्कद्वारा उनलाई पराजित गरिदिए अर्थात् यस पटक पनि बलरामले हार्नुभयो ॥१३॥ त्यसपछि बलरामले दस हजार निष्क अर्थात् चालीस हजार सुवर्णको एउटा अर्को दाउ थाप्नुभयो। जुवाका अत्यन्त विशेषज्ञ रहेका रुक्मीले त्यो दाउ पनि जिते तथा बलराम फेरि पराजित हुनुभयो ॥१४॥ हे ब्राह्मणश्रेष्ठ! यसरी बलराम पराजित हुनु भएपछि मूर्ख कलिङ्गराज आफ्ना दाँतहरू देखाउँदै अत्यन्त उच्च स्वरमा हाँस्न थाल्यो अर्थात् उसले आफ्नो मुखबाट अट्टहास निकाल्यो र बलको घमण्डले अत्यन्त उन्मत्त भएका रुक्मीले भने ...॥१५॥ जुवाका विषयमा पूर्ण रूपमा अनभिज्ञ रहेका बलरामलाई मैले पराजित गरिदिएँ । यिनले अनावश्यक रूपमा नै जुवाको गर्वले अन्धो भएर जुवा खेल्नमा अत्यन्त सिपालु व्यक्तिहरूको अपमान गरिरहेका थिए अर्थात् गर्दथे ॥१६॥ यसप्रकार कलिङ्गराजले आफ्ना सबै दाँतहरू देखाएर अत्यन्त उच्चस्वरमा हाँसिरहेको र रुक्मीले अपशब्दको प्रयोग गरेको देखेर अत्यन्त पराक्रमी बलराम ज्यादै क्रोधित हुनुभयो ॥१७॥ त्यसपछि अत्यन्त क्रोधित हुनुभएका बलरामले कोटि अर्थात् करोड सुवर्णको एउटै दाउ लगाउनुभयो र रुक्मीले त्यसलाई पनि आफ्नो बनाउने लक्ष्य लिएर आफ्नो पासा फ्याँक्यो अर्थात् पासालाई खालमा पछाऱ्यो ॥१८॥ तर त्यसमा बलरामले

अजयद् बलदेवस्तं प्राहोच्चैर्विजितं मया।

मयेति रुक्मी प्राहोच्चैरलीकोक्तेरलं बल ॥१९॥

त्वयोक्तोऽयं ग्लहः सत्यं न मयैषोऽनुमोदितः।

एवं त्वया चेद् विजितं मया न विजितं कथम् ? ॥२०॥

पराशर उवाच

अथान्तरिक्षे वागुच्चैः प्राह गम्भीरनादिनी।

बलदेवस्य तं कोपं वर्द्धयन्ती महात्मनः ॥२१॥

जितं बलेन धर्मेण रुक्मिणा भाषितं मृषा।

अनुक्त्वापि वचः किञ्चित् कृतं भवति कर्मणा ॥२२॥

ततो बलः समुत्थाय कोपसंरक्तलोचनः।

जघानाष्टापदेनैव रुक्मिणं सुमहाबलः ॥२३॥

कलिङ्गराजञ्चादाय विस्फुरन्तं बलाद् बलः।

बभञ्ज दन्तान् कुपितो यैः प्रकाशं जहास सः ॥२४॥

आकृष्य च महास्तम्भं जातरूपमयं बलः।

जघान येऽन्ये तत्पक्षा भूभृतः कुपितो भृशम् ॥२५॥

ततो हाहाकृतं सर्वं पलायनपरं द्विज।

तद्राजमण्डलं भीतं बभूव कुपिते बले ॥२६॥

जित्नुभयो र उहाँले उच्चस्वरमा भन्नुभयो "मैले जितें।" यसमा रुक्मीले पनि उच्च स्वरमा भने–हे बलराम! यो दाउ पनि मैले नै जितेको छु, असत्य बोलेर केही पनि लाभ हुन सक्दैन ॥१९॥ तपाईंले यो दाउमा जितेको बताउनु भएको थियो तर मैले त्यसलाई अनुमोदन गरेको थिइँन अर्थात् त्यसमा स्वीकृति जनाएको थिइँन। यसप्रकार यदि तपाईंको विजय हुन्छ अर्थात् जीत हुन्छ भने मेरो जीत किन हुँदैन? ॥२०॥ **पराशरजीले भन्नुभयो**– त्यस समयमा महात्मा बलराममा उत्पन्न भएको क्रोधलाई अत्यधिक रूपमा बढाउँदै आकाशवाणीले अत्यन्त गम्भीर स्वरमा भन्यो अर्थात् स्पष्ट शब्दको आकाशवाणी भयो ॥२१॥ "धर्म अनुसार यो दाउ निश्चित रूपमा बलरामले नै जित्नुभएको हो, रुक्मीले असत्य वचन बोलिरहेको छ। किनकि, उसले अनुमोदन नगरे तापनि पासा फ्याँकेको हुनाले कार्यद्वारा यो अनुमोदित भएको मानिन्छ अर्थात् यसमा रुक्मीको स्वीकृति रहेको मानिन्छ"॥२२॥ त्यसपछि अत्यन्त शक्तिशाली बलराम अत्यन्त क्रोधित हुनु भएर आफ्ना आँखाहरू राता–राता पार्दै उठ्नुभयो र जुवा खेलिरहेको पासाहरूले नै रुक्मीको वध गरिदिनुभयो अर्थात् रुक्मीलाई मारिदिनुभयो ॥२३॥ फेरि तर्सिरहेको कलिङ्गराजलाई पनि अत्यन्त बलपूर्वक समाउनु भएर जुन दाँतहरू देखाएर केही समय अगाडिसम्म उच्च स्वरमा हाँसिरहेको थियो, ती सबै दाँतहरू जमिनमा झारिदिनु भयो अर्थात् उसलाई पूर्ण रूपमा थोते बनाइदिनुभयो ॥२४॥ त्यस समयमा अत्यन्त क्रोधित हुनुभएका बलरामले बलपूर्वक एउटा सुवर्णमय स्तम्भ अर्थात् खाम्बो तानेर अर्थात् उखेलेर त्यसैले शत्रुपक्षका सबै राजाहरूलाई मारिदिनु भयो अर्थात् तिनीहरू सबैको पूर्ण रूपमा विनाश गरिदिनुभयो ॥२५॥ हे ब्राह्मणश्रेष्ठ!अत्यन्त शक्तिशाली बलराम यसरी क्रोधित हुनुभएको देखेपछि त्यहाँ जम्मा भएका सबै मानिसहरू भयभीत भएर भाग्न थाले र त्यहाँ आएका अन्य सबै राजाहरू पनि भयभीत भए ॥२६॥ हे मैत्रेय! अत्यन्त पराक्रमी बलरामद्वारा रुक्मीको वध भएको सुन्नु भए तापनि

बलेन निहतं श्रुत्वा रुक्मिणं मधुसूदनः ।
नोवाच किञ्चिन्मैत्रय! रुक्मिणी–बलयोर्भयात् ॥२७॥
ततोऽनिरुद्धमादाय कृतोद्वाहं द्विजोत्तम ।
द्वारकामजगामाथ यदुचक्रं सकेशवम् ॥२८॥

परमात्मा श्रीमधुसूदनले रुक्मि र बलरामको भयका कारणले केही पनि भन्नुभएन अर्थात् पूर्ण रूपमा शान्त भएर बस्नु भयो ॥२७॥ हे ब्राह्मणश्रेष्ठ! त्यसपछि विवाहित अनिरुद्धलाई आफैसँग लिएर परमात्मा श्रीकेशवसहित सबै यादवहरू फर्किएर द्वारकामा आए ॥२८॥

इति श्रीविष्णुमहापुराणे पञ्चमांशे अष्टविंशोऽध्यायः ।



## एकोनत्रिंशोऽध्यायः		अध्याय – २९

## "नरकासुरवधः"

(नरकासुरको वध)

पराशर उवाच

द्वारवत्यां ततः शौरिंशक्रस्त्रिभुवनेश्वरः ।

आजगामाथ मैत्रेय! मत्तैरावतपृष्ठगः ॥१॥

प्रविश्य द्वारकां सोऽथ समेत्य हरिणा ततः ।

कथयामास दैत्यस्य नरकस्य विचेष्टितम् ॥२॥

इन्द्र उवाच

त्वया नाथेन देवानां मनुष्यत्वेऽपि तिष्ठता ।

प्रशमं सर्वदुःखाननि नीतानि मधुसूदन ॥३॥

तपस्विव्यसनार्थाय सोऽरिष्टो धेनुकस्तथा ।

प्रवृत्तो यस्तथाः केशी ते सर्वे निहतास्त्वया ॥४॥

कंसः कुवलयापीडः पूतना बालघातिनी ।

नाशं नीतास्त्वया सर्वे येऽन्ये जगदुपद्रवाः ॥५॥

युष्मद्दोर्दण्ड–सद्बुद्धिपरित्राते जगत्त्रये ।

यज्वियज्ञांशसम्प्राप्त्या तृप्तिं यान्ति दिवौकसः ॥६॥

सोऽहं साम्प्रतमायातो यन्निमित्तं जनार्दन ।

तच्छ्रुत्वा तत्प्रतीकारप्रयत्नं कर्तुमर्हसि ॥७॥

**पराशरजीले भन्नुभयो–** हे मैत्रेय! एक दिन त्रिभुवनपति इन्द्र आफ्नो उन्मत्त ऐरावत नाम भएको हात्तीमा सवार भएर द्वारका नगरीमा परमात्मा श्रीकृष्णका सामीप्यमा आए ॥१॥ इन्द्रले द्वारका नगरीमा आएर परब्रह्म परमात्मा श्रीकृष्णको दर्शन गरे। त्यसपछि उहाँसँग नरकासुर नाम भएको अत्यन्त दुराचारी र दुष्टात्मा दैत्यले गरिरहेको दुर्व्यवहारका विषयमा सविस्तार बताउन आरम्भ गरे ॥२॥ **इन्द्रले भने–** हे मधुसूदन! यस समयमा हजुरले मनुष्यको स्वरूप धारण गरेर पृथ्वीमा अर्थात् द्वारका नगरीमा निवास गरिरहनु भएको छ अर्थात् हामी सबै देवताहरूका अधिपति हजुरले हामीलाई दुःख हुन दिनु भएको छैन ॥३॥ हजुरले जुन अत्यन्त दुराचारी र दुष्टात्मा असुरहरूले तपस्यामा व्यवधान उत्पन्न गराएर उनीहरूको विनाश गरिरहेका थिए, ती अरिष्ट धेनुक र केशी जस्ता अत्यन्त भयानक असुरहरूको पूर्ण रूपमा विनाश गरिदिनुभयो अर्थात् तिनीहरूलाई मारिदिनुभयो ॥४॥ यसरी नै हजुरले अत्यन्त अत्याचारी तथा दुराचारी कंस, कुवलयापीड एवम् बालघातिनी अर्थात् आफ्नो स्तन चुसाएर बालकहरूको विनाश गरिदिने पूतना र संसारमा उत्पात मच्चाउने अन्य सबै दुष्टहरूको पनि विनाश गरिदिनुभयो अर्थात् तिनीहरूलाई मारिदिनुभयो ॥५॥ हजुरको दुर्दान्त अर्थात् दबाउन कठिन पर्ने बुद्धिबलको प्रभावद्वारा असज्जन अर्थात् अन्यायी र दुराचारीहरूबाट तीनोटै लोकहरूको रक्षा भइरहेको छ तथा यस समयमा यज्ञकर्ताहरूद्वारा दिइएको यज्ञभाग प्राप्त भइरहेकाले देवताहरू पनि तृप्त अर्थात् सन्तुष्ट भइरहेका छन् ॥६॥ हे जनार्दन! यस समयमा म त्यही देवराज इन्द्र हजुरका समीपमा जुन समस्या लिएर आएको छु, त्यसका विषयमा सुनिदिनुहोस् र त्यसको प्रतिकार अर्थात् त्यो दुष्टको पूर्ण रूपमा विनाश गरिदिएर संसारको कल्याण गरिदिनका लागि प्रयत्नशील भइदिनुहोस् ॥७॥ हे

भौमोऽयं नरको नाम्ना प्राग्ज्योतिषपुरेश्वरः ।

करोति सर्वभूतानामुपघातमरिन्दम ॥८॥

देवसिद्धसुरादीनां नृपाणाञ्च जनार्दन ।

हत्वा हि सोऽसुरः कन्या रुरोध निजमन्दिरे ॥९॥

छत्रं यत् सलिलस्रावि तज्जहार प्रचेतसः ।

मन्दरस्य तथा श्रृङ्गं हृतवान् मणिपर्वतम् ॥१०॥

अमृतस्राविणी दिव्ये मन्मातुः कृष्ण! कुण्डले ।

जहार सोऽसुरोऽदित्या वाञ्छत्यैरावतं गजम् ॥११॥

दुर्नीतमेतद् गोविन्द! मया तस्य तवोदितम् ।

यदत्र प्रतिपत्तव्यं तत् स्वयं प्रविमृष्यताम् ॥१२॥

पराशर उवाच

इति श्रुत्वा स्मितं कृत्वा भगवान् देवकीसुतः ।

गृहीत्वा वासवं हस्ते समुत्तस्थौ वरासनात् ॥१३॥

चिन्तयामास च विभुर्मनसा पन्नगाशनम् ।

सञ्चिन्तितमुपारुह्य गरुडं गगनेचरम् ।

सत्यभामां समारोप्य ययौ प्राग्ज्योतिषं पुरम् ॥१४॥

शत्रुका दमन गर्नुहुने परमात्मा! पृथ्वीको पुत्र नरकासुर नाम भएको एक असुर प्राग्ज्योतिषपुरको राजा भएर बसेको छ। त्यसले यस समयमा सबै प्राणीहरूमा अन्याय र अत्याचार गर्दै पृथ्वीमा उत्पात मच्चाइरहेको छ अर्थात् उसको अत्याचारबाट सबै प्राणीहरू अत्यन्त पीडित भइरहेका छन् ॥८॥ हे जनार्दन! त्यो नरकासुर नाम भएको अत्यन्त दुराचारी दैत्यले यस समयमा देवताहरू, सिद्ध, असुर एवं सबै राजाहरूका छोरीहरूलाई बलपूर्वक अर्थात् जबर्जस्ती अपहरण गरेर आफ्नो घरमा थुनेर अर्थात् बन्दी बनाएर राखेको छ ॥९॥ यसरी नै त्यो अत्याचारी नरकासुरले वरुण देवताको पानी वर्षाउने छाता एवं मन्दराचल पर्वतको शोभासम्पन्न मणिपर्वत नाम भएको शिखर जबर्जस्ती अपहरण गरेर आफ्नो नियन्त्रणमा लिएको छ ॥१०॥ हे कृष्ण! त्यो दुष्टात्मा नरकासुरले मेरी माता अदितिसँग रहेको अमृतको वर्षा गराउने दिव्य कुण्डल पनि अपहरण गरेर लगेको छ र उसले सधैं मेरो यो ऐरावत हात्ती पनि अपहरण गरेर लैजाने अभिलाषा लिइरहेको हुन्छ अर्थात् यसलाई पनि अपहरण गर्ने योजना बनाएको छ ॥११॥ हे गोविन्द! मैले हजुरका सामीप्यमा यो नरकासुरद्वारा भइरहेका अर्थात् गरिएका यी सबै दुर्नीतिहरूका विषयमा स्पष्ट शब्दमा बताएँ। यस समयमा यस विषयमा जे गर्दा कल्याणदायक हुन्छ, त्यसको विचार हजुर स्वयंले गरिदिनुहुन अनुरोध गर्दछु ॥१२॥ **पराशरजीले भन्नुभयो–** देवकीको पुत्रका रूपमा उत्पन्न हुनुभएका परमात्मा श्रीकृष्ण इन्द्रले यसरी सबै कुरा बताइसकेपछि अर्थात् उनका कुरा सुनिसकेपछि मन्द मुस्कान सहित हात समाएर आफू बसिरहनु भएको अत्यन्त उत्तम आसनबाट उठ्नुभयो ॥१३॥ त्यसपछि सर्वव्यापी परमात्मा श्रीकृष्णले मानसिक रूपमा गरुडको स्मरण गर्नुभयो। उहाँले स्मरण गर्नासाथै उहाँको सामीप्यमा उपस्थित भएका आकाशमार्गमा विचरण गरिहिड्ने गरुडमा सत्यभामाका साथ सवार भएर उहाँले प्राग्ज्योतिषपुरको यात्रा आरम्भ गर्नुभयो अर्थात् नरकासुरको अत्याचारबाट सबैलाई मुक्त गराउनका लागि प्राग्ज्योतिषपुरतर्फ प्रस्थान गर्नुभयो ॥१४॥

आरुह्यैरावतं नागं शक्रोऽपि त्रिदिवालयम् ।

ततो जगाम मैत्रेय! पश्यतां द्वारकौकसाम् ॥१५॥

प्राग्ज्योतिषपुरस्यासीत् समन्ताच्छतयोजनम् ।

आचिता मौरवैः पाशैः क्षुरान्तैर्भूर्द्विजोत्तम ॥१६॥

तांश्चिच्छेद हरिः पाशान् क्षिप्त्वा चक्रं सुदर्शनम् ।

ततो मुरः समुत्तस्थौ तं जघान च केशवः ॥१७॥

मुरस्य तनयान् सप्त सहस्रांस्तांस्ततो हरिः ।

चक्रधाराग्निनिर्दग्धांश्चकार शलभानिव ॥१८॥

हत्वा मुरं हयग्रीवं तथा पञ्चजनं द्विज ।

प्राग्ज्योतिषपुरं धीमांस्त्वरावान् समुपागतः ॥१९॥

नरकेणास्य तत्राभून्महासैन्येन संयुगः ।

कृष्णस्य यत्र गोविन्दो जघ्ने दैत्यान् सहस्रशः॥२०॥

शस्त्रास्त्रवर्षं मुञ्चन्तं भौमं तं नरकं बली ।

क्षिप्त्वा चक्रं द्विधा चक्रे चक्री दैतेचक्रहा ॥२१॥

हते तु नरके भूमिर्गृहीत्वादितिकुण्डले ।

उपतस्थे जगन्नाथं वाक्यं चेदमथाब्रवीत् ॥२२॥

त्यसपछि हे मैत्रेय! द्वारकाका बासिन्दाहरूले हेर्दाहेर्दै देवराज इन्द्र पनि आफ्नो अत्यन्त उत्तम हात्ती ऐरावतमा सवार भएर स्वर्गतर्फ प्रस्थान गरे अर्थात् स्वर्गमा गए ॥१५॥ हे ब्राह्मणश्रेष्ठ! प्राग्ज्योतिषपुरलाई चारैतिरबाट सय योजनसम्मको पृथ्वी छुराको धारजस्तो मुर नाम भएको दावनद्वारा निर्माण गरिएका अत्यन्त तेजिलो धार भएका पाश अर्थात् प्राचीनकालीन युद्धमा प्रयोग हुने एक किसिमको हतियारले पूर्ण रूपमा घेरिएको थियो ॥१६॥ परमात्मा श्रीकृष्णले ती पाशाहरूलाई आफ्नो सुदर्शनक्रको प्रहार गरे पूर्ण रूपमा ध्वस्त पारिदिनुभयो अर्थात् काटिदिनुभयो। त्यसपछि मुर नाम भएको दानव भगवान्सँग युद्ध गर्नका लागि तयार भएर अगाडि आयो र भगवान्ले त्यसको पनि विनाश गरिदिनुभयो अर्थात् त्यसलाई मारिदिनुभयो ॥१७॥त्यसपछि परब्रह्म परमात्मा श्रीहरिले मुरका सात हजार पुत्रहरूलाई पनि शलभ अर्थात् सलह (कीरा) लाई जसरी नै आफ्नो सुदर्शनचक्रको अग्निधाराबाट पूर्ण रूपमा विनष्ट गरिदिनुभयो अर्थात् उनीहरूलाई पनि मारिदिनुभयो ॥१८॥ हे ब्राह्मणश्रेष्ठ! यसप्रकार सर्वज्ञ परमात्मा श्रीहरिले मुर, हयग्रीव र पञ्चजनको पूर्ण रूपमा विनाश गरिदिनुभएपछि अर्थात् तिनीहरूलाई मार्नुभएपछि अत्यन्त शीघ्रतापूर्वक प्राग्ज्योतिषपुरमा प्रवेश गर्नुभयो ॥१९॥ त्यसपछि आफ्ना सेनापतिहरूद्वारा पूर्ण रूपमा घेरिएर बसेको नरकासुरसँग परमात्मा श्रीकृष्णको अत्यन्त भयानक युद्ध आरम्भ भयो । यस युद्धमा परमात्मा श्रीगोविन्दले हजारौं दैत्यहरूको संहार गर्नुभयो अर्थात् तिनीहरूलाई मारिदिनुभयो ॥२०॥ त्यसपछि शक्तिशाली एवं दैत्यहरूका संहारकर्ता परमात्मा श्रीकृष्णले शस्त्रहरूको वर्षा गराउने सामर्थ्य भएको पृथ्वीको पुत्र त्यो दुराचारी एवम् अन्यायी नरकासुरलाई आफ्नो सुदर्शनचक्रको प्रयोग गरेर दुई खण्डमा विभाजन गरिदिनुभयो अर्थात् दुइटुक्रा पारिदिनु भयो ॥२१॥ यसप्रकार नरकासुरको वध भइसकेपछि पृथ्वी अदितिका कुण्डल आफ्ना साथैमा लिएर परब्रह्मपरमात्मा श्रीकृष्णका सामीप्यमा उपस्थित भइन् र परमात्मा श्रीजगन्नाथसँग भन्न थालिन् ॥२२॥

पृथिव्युवाच

यदाहमुद्धृता नाथ! त्वया शूकरमूर्तिना।

त्वत्स्पर्शसम्भवः पुत्रस्तदायं मय्यजायत ॥२३॥

सोऽयं त्वयैव दत्तो मे त्वयैव विनिपातितः।

गृहाण कुण्डले चेमे पालयास्य च सन्ततिम् ॥२४॥

भारावतारणार्थाय ममैव भगवानिमम्।

अंशेन लोकमायातः प्रसादसुमुखः प्रभो ॥२५॥

त्वं कर्ता त्व विकर्ता च संहर्ता प्रभवोऽव्ययः।

जगतां त्वं जगद्रूपः स्तूयतेच्युत! किं तव ॥२६॥

व्यापी व्याप्यः क्रिया कर्ता कार्यञ्च भगवान् यथा।

सर्वभूतात्मभूतस्य स्तूयते तव किं तदा ॥२७॥

परमात्मा च भूतात्मा महात्मा चाव्ययो भवान्।

यदा तदा स्तुतिर्नाथ! किमर्थं ते प्रवर्तते ॥२८॥

प्रसीद सर्वभूतात्मन्! नरकेण हि यत् कृतम्।

तत् क्षम्यतामदोषाय त्वत्सुतः त्वन्निपातितः ॥२९॥

पराशर उवाच

तथेति चोक्त्वा धरणीं भगवान् भूतभावनः।

रत्नानि नरकावासाज्जग्राह मुनिसत्तम ॥३०॥

**पृथ्वीले भनिन्**– हे नाथ! हजुरले परापूर्व कालमा बराह स्वरूप धारण गरेर मेरो उद्धार गर्नुभएको थियो। त्यसै समयमा मद्वारा हजुरको अङ्ग स्पर्श भएकाले मेरो कोखबाट यो नरकासुर नाम भएको पुत्र उत्पन्न भएको थियो अर्थात् जन्मिएको थियो ॥२३॥ यसप्रकार मलाई हजुरले नै यो पुत्र दिनुभएको थियो एवं आज हजुरले नै यसको विनाश गरिदिनुभयो अर्थात् यसलाई मारिदिनुभयो। अब हजुर यी दुवै कुण्डलहरू स्वीकार गर्नुहोस् र ममा कृपा गरेर यी नरकासुरका पुत्रहरूको पालन–पोषण गर्नुहोस् अर्थात् आजदेखि यिनीहरू प्रतिको सबै किसिमको दायित्व स्वीकार गरिदिनुहोस् ॥२४॥ हे प्रभु! हजुर परमात्मा हुनुहुन्छ, हजुर अत्यन्त प्रसन्न भइदिनु भएर मेरै भार अर्थात् ममाथि रहेको असत्य बोझबाट मलाई मुक्त गरिदिनका लागि आफ्नो अंशबाट मर्त्यलोक अर्थात् पृथ्वीमा अवतार लिनुभएको हो ॥२५॥ हे अच्युत! हजुर नै सम्पूर्ण जगत्को उत्पत्तिकर्ता, हजुर नै पालनकर्ता र हजुर नै संकारकर्ता पनि हुनुहुन्छ। हजुर नै सबै प्राणीमात्रको उत्पत्तिको कारकतत्त्व र लयस्थान अर्थात् विलय हुने स्थान पनि हुनुहुन्छ। हजुर नै जगत्स्वरूप हुनुहुन्छ। म हजुरको स्तुति गर्ने कार्यमा कसरी समर्थ हुन सक्दछु? ॥२६॥ हे भगवान्! जब हजुर स्वयं व्यापक, व्याप्त, क्रिया र कार्यस्वरूप हुनुहुन्छ भने यस्तो अवस्थामा म हजुरको स्तुति गर्ने कार्यमा कसरी सक्षम हुन सक्दछु? अर्थात् म हजुरको स्तुति गर्न यथार्थ रूपमा असमर्थ छु॥२७॥ हे परमात्मा! जब हजुर नै परमात्मा, हजुर नै भूतात्मा एवम् अव्यय जीवात्मास्वरूप हुनुहुन्छ, यस्तो अवस्थामा कुन वस्तुलाई आधार मानेर मैले हजुरको स्तुति गरुँ ॥२८॥ हे सर्वभूतात्मा भगवान्! हजुर प्रसन्न भइदिनुहोस् र आफ्नै पुत्र नरकासुरद्वारा भए गरेका सबै अत्याचारहरू क्षमा गरिदिनुहोस्। दोष निवारण गर्ने मनसायले गर्दा नै हजुरले आफ्नो पुत्रको सर्वनाश गरिदिनुभएको हो अर्थात् त्यसलाई मारिदिनुभएको हो ॥२९॥ **पराशरजीले भन्नुभयो**– हे मुनिश्रेष्ठ! विष्णु भगवान्ले "तिम्रो इच्छा पूर्ण होस्" यस प्रकार पृथ्वीलाई बताउनु भएर नरकासुरको महलबाट विभिन्न किसिमका अमूल्य रत्नहरू ग्रहण गर्नुभयो अर्थात् स्वीकार गर्नुभयो ॥३०॥ हे बुद्धिमान्! अतुलनीय पराक्रम

कन्यापुरे स कन्यानां षोडशातुलविक्रमः।
शताधिकानि ददृशे सहस्राणि महीपते ॥३१॥

चर्तुर्दन्तान् गजांश्चाग्र्या षट्सहस्रान् स दृष्टवान्।
काम्बोजानां तथाश्वानां नियुतान्येकविंशतिम् ॥३२॥

कन्यास्ताश्च तथा नागांस्तथाश्वान् द्वारकां पुरीम्।
प्रेषयामास गोविन्दः सद्यो नरककिङ्करैः ॥३३॥

ददृशे वारुणं छत्रं तथैव मणिपर्वतम्।
आरोपयामास हरिर्गरुडे पन्नगाशने ॥३४॥

आरुह्य च स्वयं कृष्णः सत्यभामासहायवान्।
अदित्याः कुण्डले दातुं जगाम त्रिदिवालयम् ॥३५॥

हुनुभएका परमात्मा श्रीकृष्णले नरकासुरका कन्याहरूले निवास गर्ने महलमा गएर हेर्दा त्यहाँ सोह्र हजार एक सय कन्याहरू रहेको देख्नुभयो ॥३१॥ भगवान् श्रीकृष्णले नरकासुरको नगरमा चार दाँत भएका अत्यन्त भयानक शरीर भएका छ हजार हात्ती, एक्काईस लाख काम्बोजदेशमा उत्पन्न भएका घोडाहरू पनि रहेको देख्नुभयो ॥३२॥ त्यस समयमा परमात्मा श्रीगोविन्दले नरकासुरका सेवकहरूका साथमा ती सबै कन्याहरूलाई, हात्तीहरूलाई र घोडाहरूलाई त्यसै दिन द्वारकापुरीमा पठाइदिनुभयो ॥३३॥ त्यसपछि परमात्मा श्रीहरिले वरुणको पानी वर्षाउने छाता र मन्दराचल पर्वतको शोभा मणिपर्वतलाई देख्नुभयो र यी दुवैलाई सर्पहरूको भोजन गर्ने आफ्नो वाहन गरुडका पिठ्यूँमा राखिदिनुभयो ॥३४॥ त्यसपछि परब्रह्म परमात्मा श्रीकृष्णले अदितिलाई कुण्डल दिनका लागि सत्यभामालाई साथमा लिएर गरुडका पिठ्यूँमा सवार भएर स्वर्गलोकतिर प्रस्थान गर्नुभयो अर्थात् स्वर्गलोकमा जानुभयो ॥३५॥

इति श्रीविष्णुमहापुराणे पञ्चमांशे एकोनत्रिंशोऽध्यायः।



## त्रिंशोऽध्यायः　　　　अध्याय – ३०

### "पारिजातहरणम्"

(पारिजातको अपहरण)

पराशर उवाच

**गरुडो वारुणं छत्रं तथैव मणिपर्वतम्।**

**सभार्यञ्च हृषीकेशं लीलयैव वहन् ययौ ॥१॥**

**ततः शङ्खमुपाध्मासीत् स्वर्गद्वारगतो हरिः।**

**उपतस्थुस्तथा देवाः सार्घ्यहस्ता जनार्दनम् ॥२॥**

**सः देवैरर्चितः कृष्णो देवमातुर्निवेशनम्।**

**सिताभ्रशिखराकारं प्रविश्य ददृशेऽदितिम् ॥३॥**

**स तां प्रणम्य शक्रेण सह ते कुण्डलोत्तमे।**

**ददौ नरकनाशञ्च शशंसास्यै जनार्दनः ॥४॥**

**ततः प्रीता जगन्माता धातारं जगतां हरिम्।**

**तुष्टावादितिरव्यग्रा कृत्वा तत्प्रवणं मनः ॥५॥**

अदितिरूवात

**नमस्ते पुण्डरीकाक्ष! भक्तानामभयङ्कर।**

**सनातनात्मन् सर्वात्मन्! भूतात्मन्! भूतभावन ॥६॥**

**पराशरजीले भन्नुभयो–** त्यसपछि पक्षीहरूका राजा गरुड वरुणको त्यो पानी वर्षाउने छाता, मणिपर्वत र सत्यभामासहित परमात्मा श्रीकृष्णलाई लीलापूर्वक आफ्नो पिठ्यूँमा बोकेर उड्न अर्थात् स्वर्गतिर जान थाले ॥१॥ त्यसपछि स्वर्गको ढोकामा पुगिसकेपछि परमात्मा श्रीकृष्णले आफ्नो अत्यन्त उच्च स्वर भएको पाञ्चजन्य नाम भएको शङ्ख बजाउनुभयो । त्यो शङ्खको आवाज सुनेर देवताहरू आ–आफ्ना हातमा अर्घपात्र अर्थात् अर्घ समर्पण गर्ने पात्र लिएर परमात्मा श्रीकृष्णका अगाडि उपस्थित भए ॥२॥ ती देवताहरूद्वारा सुपूजित भइसकेपछि परमात्मा श्रीकृष्णले देवमाता अदितिको सेतो हिउँले पूर्ण रूपमा भरिएको शिखरजस्तो अत्यन्त चमकदार घरमा प्रवेश गरेर देवमाता अदितिको दर्शन गर्नुभयो ॥३॥ त्यसपछि परमात्मा श्रीजनार्दनले देवराज इन्द्रसँगै देवमाता अदितिलाई प्रणाम गर्नुभयो र उहाँलाई ती दुवै अत्यन्त उत्तम दिव्य कुण्डलहरू दिनुभयो तथा नरकासुरको मृत्युका विषयमा सविस्तार बताउनुभयो अर्थात् सबै कुरा विस्तारपूर्वक सुनाइदिनुभयो ॥४॥ त्यसपछि जगज्जननी अदितिले अत्यन्त प्रसन्न भएर शान्तभावपूर्वक यथार्थ रूपमा तन्मय अर्थात् एकाग्रतापूर्वक र आफ्नो अन्तरात्मालाई पूर्ण रूपमा स्थिर बनाएर परब्रह्म परमात्मा श्रीहरिको स्तुति गर्न थालिन् ॥५॥ **अदितिले भनिन्–** हे पुण्डरीक नाम भएको हृदयकमलमा अटल रूपले निवास गर्नुहुने भगवान् विष्णु! हे सनातनस्वरूप! हे सबै जीवमात्रको आत्मास्वरूप भगवान्! हे जीवात्मास्वरूप परमात्मा! हे भगवान् श्रीविष्णु! हजुरलाई नमस्कार छ ॥६॥ हजुर नै मन, बुद्धि र इन्द्रियहरूका रचयिता हुनुहुन्छ । हे

प्रणेतर्मनसो बुद्धेरिन्द्रियाणां गुणात्मक ।

त्रिगुणातीत! निर्द्वन्द्व! शुद्धसत्त्व! हृदि स्थित ॥७॥

सितदीर्घादिनिश्शेष–कल्पनापरिवर्जित ।

जन्मादिभिरसंस्पृष्ट! स्वप्नादिपरिवर्जित ॥८॥

सन्ध्या रात्रिरहोभूमिर्गगनं वायुरम्बु च ।

हुताशनो मनो बुद्धिर्भूतादिस्त्वं तथाच्युत ॥९॥

सृष्टि–स्थिति–विनाशानां कर्ता कर्तीपतिर्भवान् ।

ब्रह्म–विष्णु–शिवारख्याभिरात्मामूर्तिभिरीश्वर ॥१०॥

देवा यक्षास्तथा दैत्या राक्षसाः सिद्धपन्नगाः ।

कूष्माण्डाश्च पिशाचाश्च गन्धर्वा मनुजास्तथा ॥११॥

पशवो मृगमातङ्गास्तथैव च सरीसृपाः ।

वृक्ष–गुल्म–लता बह्व्यः समस्तास्तृणजातयः ॥१२॥

स्थूला मध्यास्तथा सूक्ष्माः सूक्ष्मात्ः–सूक्ष्मतराश्च ये ।

देहभेदा भवान् सर्वे ये केचिद् पुद्गलाश्रयाः ॥१३॥

माया तवेयमज्ञातपरमार्थातिमोहिनी ।

अनात्मन्यात्मविज्ञानं यया मूढो निरुध्यते ॥१४॥

गुणस्वरूप! हे तीनोटै गुणहरूबाट यथार्थ रूपमा अतीत (टाढा) रहनु हुने परमात्मा! हे विकाररहित परमात्मा! हे शुद्धतत्त्व अर्थात् तत्त्वमसि परमात्मा! हे अन्तर्यामी परब्रह्म! हजुरलाई नमस्कार छ ॥७॥ हे परमात्मा! हजुर श्वेत (सेतो), दीर्घ (लामो) जस्ता सबै किसिमका कल्पनाहरूबाट पूर्ण रूपमा रहित हुनुहुन्छ। हजुर जन्म, मृत्यु जस्ता विकारहरूबाट पनि अलग हुनुहुन्छ एवं स्वप्न, सुषुप्ति, जाग्रतावस्था यस्ता सबै किसिमका अवस्थाहरूबाट यथार्थ रूपमा अलग हुनुहुन्छ, हजुरलाई नमस्कार छ ॥८॥हे अच्युत! सन्ध्या, रात्रि, दिन, भूमि, आकाश, वायु, जल र बुद्धि यी सबै हजुरकै स्वरूप एवं हजुर सबै किसिमका भूतहरूको आदिभूत पनि हुनुहुन्छ । यसप्रकारका सर्वमय परमात्मालाई नमस्कार छ ॥९॥हे ईश्वर! हजुर नै सृष्टि, अवस्थिति र विनाशकर्ता हुनुहुन्छ र यी सबैको कर्ता पनि हुनुहुन्छ। हजुर नै ब्रह्मा, विष्णु र शिवस्वरूप हुनुहुन्छ र यी तीनोटै मूर्तिहरू अर्थात् स्वरूपहरू धारण गर्नुभएर यसभन्दा पहिले बताइए अनुसारका तीनोटै कार्यहरू पनि हजुरबाटै सम्पन्न भइरहेका हुन्छन् अर्थात् यस संसारमा हजुरबाहेक अन्य कुनै तत्त्वको अस्तित्व रहेको छैन ॥१०॥ देवता, यक्ष, दैत्य, राक्षस, सिद्ध, नाग, कूष्माण्डा (भद्रकाली कल्पअनुसार नवदुर्गामध्ये चतुर्थ दुर्गा), पिशाच, गन्धर्व, मनुष्य, पशु, मृग, मातङ्ग (हात्ती) सर्प, गुल्म (धेरै लामो नहुने तर मालतीको झैं झाङ्गिने छाँटको लहरो), लता, (लहरो) एवम् सम्पूर्ण प्राणीजाति, स्थूल, मध्यस्थूल एवम् अत्यन्त स्थूल, सूक्ष्मभन्दा पनि अत्यन्त सूक्ष्मजस्ता जतिसुकै किसिमका पनि शारीरिक भेदको परमाणुको आश्रयमा अवस्थित रहेका छन्, त्यो सबै हजुरकै स्वरूप हो अर्थात् तिनीहरूसँग हजुर अभिन्न स्वरूपबाट अवस्थित रहनुभएको छ॥ ११–१३॥ जसले परमात्माको यथार्थ स्वरूपका विषयमा ज्ञान हासिल गरेको छैन, ती व्यक्तिहरूलाई अत्यन्त मोहित गराइदिने हजुरको योगमायाले आत्माभन्दा पूर्ण रूपमा अलग रहेको पदार्थस्वरूप आत्मविज्ञान उत्पन्न गराइदिएको छ अर्थात् म र मेरो भन्ने भावना उत्पन्न गराइदिएको छ ॥१४॥ हे

ममस्वे स्वमिति भावोऽत्र यत् पुंसामुपजायते।
अहं ममेति भावोऽत्र यत् प्रायेणाभिजायते।
संसारमातुर्मायायास्तवैतन्नाथ! चेष्टितम् ॥१५॥
यः स्वधर्मपरैर्नाथ! नरैराराधितो भवान्।
ते तरन्त्यखिलामेतां मायामात्मविमुक्तये ॥१६॥
ब्रह्माद्याः सकला देवा मनुष्याः पशवस्तथा।
विष्णुमायामहावर्तमोहान्धतमसावृताः ॥१७॥
आराध्य त्वामभीप्सन्ते कामानात्मभवक्षयम्।
यदेते पुरुषा माया सैवेयं भगवंस्तव ॥१८॥
मया त्वं पुत्रकामिन्या वैरिपक्षक्षयाय च।
आराधितो न मोक्षाय मायाविलसितं हि तत् ॥१९॥
कौपीनाच्छादनप्राया वाञ्छा कल्पद्रुमादपि।
जायते यदपुण्यानां सोऽपराधः स्वदोषजः ॥२०॥
तत् प्रसीदाखिलजगन्मायामोहकराव्यय।
अज्ञानं ज्ञानसद्भावभूतं भूतेश! नाशय ॥२१॥

देवाधिदेव! यही हजुरको योगमायाले नै अविवेकी मनुष्यहरूलाई सांसारिक बन्धनबाट बाँधिरहेको छ। हे नाथ! यी सांसारिक मनुष्यहरूका मनमा अनात्मामा आत्मबुद्धि अर्थात् म हुँ र यी पदार्थहरू मेरा हुन् जुन यसप्रकारका भावनाहरू उत्पन्न हुन्छन्, यी सबै हजुरको योगमायाकै लीला हो ॥१५॥हे नाथ! आफ्नो स्वधर्ममा पूर्ण रूपमा आश्रित रहेको जुन मनुष्यले मुक्ति प्राप्त गर्नका लागि अत्यन्त एकाग्रतापूर्वक हजुरको उपासना गर्दछ अर्थात् हजुरको नाम र लीलाको श्रद्धा र भक्तिपूर्वक भजन र कीर्तन गर्दछ, त्यो मनुष्यमात्र सबै किसिमका मायाहरूबाट यथार्थ रूपमा मुक्त हुन सक्दछ अर्थात् उसले मात्र यो मायामाथि विजय प्राप्त गर्न सक्दछ ॥१६॥ ब्रह्मा आदि सबै देवताहरू एवं पशुहरू, मनुष्य आदि सबै परमात्मा श्रीविष्णुको मायारूपी अत्यन्त भयानक भुमरी वा चक्करमा परेर मोहरूपी कहालीलाग्दो अन्धकारबाट पूर्ण रूपमा ढाकिएर रहेका छन् ॥१७॥ हे भगवान्! जीवमात्रले जन्म र मृत्युका बीचको समयमा हजुरको आराधना अथवा उपासना गरेर सांसारिक कामनाहरूको पूर्तिको जुन अभिलाषा राख्दछ, त्यही हजुरको माया हो। त्यसैले जीवमात्रलाई साँसारिक चक्रमा घुमाइरहेको हुन्छ ॥१८॥आफ्ना पुत्रहरूको कल्याणलाई सर्वोपरि लक्ष्य बनाएकी मैले हजुरको आराधना वा उपासना गरेर जुन आफ्ना शत्रुहरूको विनाश अर्थात् सर्वनाश गराउने कार्यमा मात्र लागिरहेँ, तर मोक्षप्राप्तिको कामना कहिल्यै पनि गरिन, यो पनि हजुरकै मायाको कार्य हो अर्थात् यो सबै मायाले नै गराएको हो ॥१९॥ कल्पवृक्षका सामीप्यमा गएर पनि सांसारिक लाज छोप्ने लगौंटी बराबरको कपडाको मात्र कामना गरिए जसरी नै हजुरको अत्यन्त नजिकमा निवास गर्न पाए तापनि पुण्य नभएकाहरूले जुन सामान्य वस्तुहरूको प्राप्तिका लागि प्रार्थना गरिरहेका हुन्छन्, त्यो आफ्नो कर्महरूको दोषमात्र हो ॥२०॥ हे सम्पूर्ण जगत्मा आफ्नो मोह फैलाउनु हुने परमात्मा! हे अव्यय! हे जीवमात्रका परम ईश्वर! हजुर मबाट प्रसन्न भइदिनुहोस्। ममा ज्ञानको अभिमानबाट उत्पन्न भएको अज्ञानलाई पूर्ण रूपमा विनष्ट गरिदिनु भएर मेरो उद्धार गरिदिनुहोस् ॥२१॥ हे

नमस्ते चक्रहस्ताय शार्ङ्गहस्ताय ते नमः।

गदाहस्ताय ते विष्णो! शङ्खहस्ताय ते मनः ॥२२॥

एतत् पश्यामि ते रूपं स्थूलचिह्नोपलक्षितम्।

न जानामि परं यत्ते प्रसीद परमेश्वर ॥२३॥

पराशर उवाच

अदित्यैवं स्तुतो विष्णुः प्रहस्याह सुरारणिम्।

माता देवि! त्वमस्माकं प्रसीद वरदा भव ॥२४॥

अदितिरुवाच

एवमस्तु यथेच्छा ते त्वमशेषैः सुरासुरैः।

अजेयः पुरुषव्याघ्र! मर्त्यलोके भविष्यसि ॥२५॥

पराशर उवाच

ततोऽनन्तरमेवास्य शक्राणीसहितादितिम्।

सत्यभामा प्रणम्याह प्रसीदेति पुनः पुनः ॥२६॥

अदितिरुवाच

मत्प्रसादान्न ते सुभ्रु! जरा वैरूप्यमेव च।

भविष्यत्यनवद्याङ्गि! सुस्थिरं नवयौवनम् ॥२७॥

पराशर उवाच

अदित्या तु कृतानुज्ञो देवराजो जनार्दनम्।

यथावत् पूजयामास बहुमानपुरः सरम् ॥२८॥

शची तु सत्यभामायै पारिजातस्य पुष्पकम्।

न ददौ मानुषीं मत्वा स्वयं पुष्पैरलङ्कृता ॥२९॥

सुदर्शनचक्र धारण गर्नुहुने परमात्मा! हजुरलाई नमस्कार छ, हे शार्ङ्ग नाम भएको धनुष तथा पाञ्चजन्य नाम भएको शङ्ख धारण गर्नुहुने परमात्मा! हजुरलाई नमस्कार छ। हे परमात्मा! हजुरलाई नमस्कार छ। हे विष्णो! हजुरले आफ्ना हातमा गदा र खड्ग अर्थात् तरवार धारण गर्नुभएको छ, हजुरलाई नमस्कार छ॥२२॥ हे परमेश्वर अर्थात् परम ईश्वर! मैले हजुरका यी स्थूल चिन्हहरूबाट सम्पन्न भएको स्वरूपलाई मात्र देखेकी छु, तर हजुरको परम दिव्य स्वरूपका विषयमा मैले ज्ञान हासिल गर्न सकेकी छैन, हजुर प्रसन्न भइदिनुहोस् ॥२३॥ **पराशरजीले भन्नुभयो–** अदितिले यस प्रकारले प्रार्थना गरिसकेपछि परमात्मा श्रीविष्णु मन्द मुस्कानमा हाँस्दै देवमाता अदितिसँग भन्नुभयो–हे देवी! तपाईं मेरी माता हुनुहुन्छ, मबाट प्रसन्न भएर मलाई बरदान दिनुहोस् ॥२४॥ **देवमाता अदितिले भनिन्–** हे पुरुषोत्तम! हजुरले जस्तो कामना गर्नुहुन्छ, त्यस्तै हुनेछ, हजुर मर्त्यलोकमा अर्थात् पृथ्वीमा सम्पूर्ण सुर र असुर अर्थात् देवता र राक्षसहरूबाट अजेय भएर रहनुहुनेछ अर्थात् कुनै दैत्य वा राक्षसले हजुरलाई पराजित गर्न सक्नेछैन ॥२५॥ **पराशरजीले भन्नुभयो–** त्यसपछि देवराज इन्द्रकी पत्नी शचीसहित सत्यभामाले देवमाता अदितिलाई श्रद्धापूर्वक प्रणाम गर्दै पटक–पटक हजुर प्रसन्न भइदिनुहोस् भन्दै प्रार्थना गर्नुभयो ॥२६॥ **देवमाता अदितिले भनिन्–** हे सौभाग्यवती! हे पूर्ण रूपमा निर्दोष अङ्गकी स्वामिनी! मेरो आशीर्वादको प्रभावले गर्दा तिमीलाई वृद्धावस्था अथवा शारीरिक कुरूपता कहिल्यै प्राप्त हुनेछैन र तिमीमा त्यो नवयौवन अर्थात् तरूनीपन सधैं अटल रूपमा रहिरहने छ अर्थात् तिमी सधैं नवयौवना भइरहनेछ्यौ ॥२७॥ **पराशरजीले भन्नुभयो–** त्यसपछि देवमाता अदितिको आज्ञा अनुसार देवराज इन्द्रले अत्यन्त आदरपूर्वक वेदोक्त विधि अनुसार परब्रह्म परमात्मा श्रीजनार्दनको षोडशोपचार पूजा गरे ॥२८॥ देवराज इन्द्रकी पत्नी शचीले मनुष्य सम्झिएर सत्यभामालाई अत्यन्त उत्तम पारिजातको फूल लगाउन दिइनन्, तर उनी स्वयंले पारिजातको फूलबाट आफ्नो शृङ्गार गरिन् अर्थात् आफूले त्यो लगाइन् ॥२९॥ हे मुनिश्रेष्ठ मैत्रेय!

ततो ददर्श कृष्णोऽपि सत्यभामासहायवान्।

देवोद्यानानि हृद्यानि नन्दनादीनि सत्तम ॥३०॥

ददर्श च सुगन्धाढ्यं मञ्जरीपुञ्जधारिणम्।

नित्याह्लादकरं ताम्रबालपल्लवशोभितम् ॥३१॥

मथ्यमानेऽमृते जातं जातरूपोपमत्वचम्।

पारिजातं जगन्नाथः केशवः केशिसूदनः ॥३२॥

तं दृष्ट्वा प्राह गोविन्दं सत्यभामा द्विजोत्तम।

कस्मान्न द्वारकामेष नीयते देवपादपः ॥३३॥

यदि ते तद्वचः सत्यं त्वमत्यर्थं प्रियेति मे।

मद्गेहनिष्कुटार्थाय तदयं नीयतां तरुः ॥३४॥

न मे जाम्बवती तादृगभीष्टा न च रुक्मिणी।

सत्ये यथा त्वमित्युक्तं त्वया कृष्णासकृत् प्रियम् ॥३५॥

सत्यं तद् यदि गोविन्द! नोपचारकृतं तव।

तदस्तु पारिजातोऽयं मम गहेविभूषणम् ॥३६॥

बिभ्रती पारिजातस्य केशपक्षेण मञ्जरीम्।

सपत्नीनामहं मध्ये शोभेयमिति कामये ॥३७॥

त्यसपछि आफ्नी पत्नी सत्यभामासहित परमात्मा श्रीकृष्ण नन्दन आदि नाम भएका सबै देवताहरूका अत्यन्त मनमोहक बगैँचाहरूको अवलोकन गर्न थाल्नुभयो ॥३०॥ ती बगैँचाहरूमा केशीसूदन परमात्मा श्रीकृष्णले अमृतमन्थन गर्दाका समयमा उत्पन्न भएको पारिजातको रूखलाई देख्नुभयो। जुन पारिजात अत्यधिक सुगन्धबाट परिपूर्ण र देवराज इन्द्रकी पत्नी शचीका लागि अत्यन्त आनन्ददायक रहेको थियो। त्यसमा नयाँ-नयाँ तामाको रङ्ग भएका पातहरू धेरै सुशोभित भइरहेका थिए र त्यसका सबै बोक्राहरू सुवर्णमय अर्थात् सुनजस्तै पहेँलो रङ्ग भएका थिए ॥३१-३२॥ हे ब्राह्मणश्रेष्ठ! त्यो अत्यन्त उत्तम पारिजातलाई देखेपछि त्यसमा प्रेम भएकाले सत्यभामा धेरै प्रसन्न भइन तथा परमात्मा श्रीकृष्णसँग भनिन्- हे गोविन्द! यो पारिजातको रूखलाई द्वारकापुरीमा किन लैजानु हुन्न अर्थात् हामी यसलाई लिएर जान सक्दैनौं? ॥३३॥ यदि हजुरले ममा अत्यन्त प्रेमभाव राख्नुहुन्छ अर्थात् सत्यभामा मेरा लागि अतिशय प्रिय छिन् भन्नुहुन्छ भने मेरो घरको बगैँचाको शोभा बढाउनका लागि यो पारिजातको रूख द्वारकापुरीमा लगिदिनुहोस् अर्थात् यसलाई हामीसँग लिएर जाऔँ ॥३४॥ हे कृष्ण! हजुरले मसँग कैयौं पटक भन्नुभएको छ कि हे सत्ये! मेरा लागि तिमी जति प्रिय रहेकी छ्यौ, त्यसरी रुक्मिणी अथवा जाम्बवती आदि कोही पनि प्रिय रहेका छैनन् अर्थात् म तिमीलाई अत्यन्त धेरै माया गर्दछु ॥३५॥ हे गोविन्द! यदि हजुरले मलाई बताउनु भएका सबै वाक्य अर्थात् वचन सत्य हुन् र मसँग यथार्थ रूपमा धेरै माया गर्नुहुन्छ तथा मलाई प्रलोभन देखाउनका लागि मात्र त्यसो नभन्नु भएको हो भने यो पारिजातले मेरो घर विभूषित गराइदिनुहोस् अर्थात् यो पारिजात मेरो बगैंचामा उपलब्ध गराइदिनुहोस् ॥३६॥ यस पारिजातको रूखमा फूलेको फूलबाट विभूषित भएर म आफ्ना सौताहरूका अगाडि अत्यन्त शोभायमान अर्थात् सबैभन्दा परम सुन्दरी हुन पाऊँ, यही मेरो मनको कामना हो अर्थात् म तपाईंका सबै पत्नीहरू भन्दा धेरै राम्री हुन चाहन्छु ॥३७॥

पराशर उवाच

इत्युक्तः सम्प्रहस्यैनां पारिजातं गरुत्मति ।

आरोपयामास हरिस्तमूचुर्वनरक्षिणः ॥३८॥

भो शची देवराजस्य महिषी तत्परिग्रहम् ।

पारिजातं न गोविन्द! हर्तुमर्हसि पादपम् ॥३९॥

शचीविभूषणार्थाय देवैरमृतमन्थने ।

उत्पादितोऽयं न क्षेमी गृहीत्वैनं गमिष्यसि ॥४०॥

देवराजो मुखप्रेक्षी यस्यास्तस्याः परिग्रहम् ।

मौढ्यात् प्रार्थयसे क्षेमी गृहीत्वैनं हि को व्रजेत् ॥४१॥

अवश्यमस्य देवेन्द्रो निष्कृतिं कृष्णः! यास्यति ।

वज्रोद्यतकरं शक्रमनुयास्यन्ति चामराः ॥४२॥

तदलं सकलैर्देवैर्विग्रहेण तवाच्युत ।

विपाककटु यत् कर्म तन्न शंसन्ति पण्डिताः ॥४३॥

पराशर उवाच

इत्युक्ते तैरुवाचैतान् सत्यभामातिकोपिनी ।

का शची पारिजातस्य को वा शक्रः सुराधिपः ॥४४॥

**पराशरजीले भन्नुभयो–** सत्यभामाले यसरी विन्ती गरेपछि परमात्मा श्रीकृष्णले मुसुमुसु हाँस्नुहुँदै त्यो अत्यन्त उत्तम पारिजातको रूखलाई देवहरूको बगैँचाबाट उखेलेर आफ्नो वाहन पक्षीराज गरुडको पिठ्यूँमा राखिदिनुभयो । त्यस समयमा त्यो बगैँचाको सुरक्षाकर्मीले भगवान्सँग भन्यो ॥३८॥ हे परमात्मा श्रीगोविन्द! यो पारिजात देवराज इन्द्रकी पत्नी शचीको निजी अर्थात् व्यक्तिगत सम्पत्ति हो । त्यसकारण हजुरले यसको अपहरण नगरिदिनुहोस् अर्थात् यो पारिजातको रूख यहाँबाट नलगिदिनुहोस् ॥३९॥क्षीर सागरमा अमृतको मन्थन गर्दाका समयमा शचीको आभूषणका लागि देवताहरूले यो पारिजातको रूखलाई उत्पन्न गराएका हुन् । तपाईं यसको अपहरण गरेर कुनै पनि अवस्थामा यहाँबाट कूशलतापूर्वक जान सक्नुहुन्न । त्यसैले यसको अपहरण न गरिदिनुहोस् ॥४०॥ देवराज इन्द्र पनि जसको मुख देखेपछि केही बोल्न सक्दैनन् अर्थात् जसका अगाडि परेपछि चुपचाप बस्दछन्, तिनै शचीको निजी सम्पत्ति यो पारिजातलाई अपहरण गरेर कुन पुरुष यहाँबाट कुशलतापूर्वक जान सक्दछ? ॥४१॥ हे परमात्मा श्रीकष्ण! देवराज इन्द्रले अनिवार्य रूपमा यसको प्रतिकार गर्नेछन् अर्थात् यो पारिजातको रूख लैजान दिनेछैनन् एवं त्यसका लागि वज्रधारण गरेका इन्द्रका पछि पछि लागेर सबै देवताहरू उनलाई सहयोग गर्नेछन् अर्थात् यो पारिजात लैजानेसँग युद्ध गर्नेछन् ॥४२॥ त्यसकारण हे अच्युत! देवाताहरूसँग अनावश्यक रूपमा विरोधी कार्य नगर्नुहोस् । जुन कार्यको फल अत्यन्त कटु अर्थात् नमिठो हुन्छ अथवा राम्रो फल प्राप्त हुँदैन, विद्वान्हरूले त्यस किसिमको कार्यलाई सधैं परित्याग गर्दछन् अर्थात् त्यस किसिमको कार्यमा लाग्दैनन् ॥४३॥ **पराशरजीले भन्नुभयो–** बगैँचाको सुरक्षाकर्मीले यसो भनिसकेपछि अत्यन्त क्रोधित भएकी सत्यभामाले भनिन्– यो पारिजातको रूख शची अथवा देवराज इन्द्रको मात्र कसरी हुन सक्दछ, यी तिनीहरू दुईले मात्र उत्पन्न गराएका त अवश्य होइनन् होला? यसैले पारिजातसँग सम्बन्धित शची अथवा इन्द्र कसरी भए? ॥४४॥ यदि यो पारिजात

मान्यः सर्वलोकानां यद्येषोऽमृतमन्थने।

मुत्पन्नस्तरुः कस्मादेको गृह्णाति वासवः ॥४५॥

या सुरा यथैवेन्दुर्यथा श्रीर्वनरक्षिण।

मान्याः सर्वलोकस्य पारिजातस्तथा द्रुमः ॥४६॥

र्बाहुमहागर्वा रुणद्ध्येनं यथा शची।

[ कथ्यतामलं क्षान्त्या सत्या हारयति द्रुमम् ॥४७॥

व्यताञ्च द्रुतं गत्वा पौलोम्या वचनं मम।

यभामा वदत्येतदिति गर्वोद्धताक्षरम् ॥४८॥

द त्वं दयिता भर्तुर्यदि वश्यः पतिस्तव।

भर्तुर्हरतो वृक्षं तत् कारय निवारणम् ॥४९॥

नामि ते पतिं शक्रं जानामि त्रिदिवेश्वरम्।

रेजातं तथाप्येनं मानुषी हारयामि ते ॥५०॥

शर उवाच

क्ता रक्षिणो गत्वा शच्या ऊचुर्यथोदितम्।

ी चोत्साहयामास त्रिदशाधिपतिं पतिम् ॥५१॥

समस्तदेवानां सैन्यैः परिवृतो हरिम्।

यौ पारिजातार्थमिन्द्रो योधयितुं द्विज ॥५२॥

समुद्रमा अमृत मन्थन गर्दाका समयमा उत्पन्न भएको हो भने सबै लोकहरूको साझा सम्पत्ति भयो। यस्तो अवस्थामा इन्द्र एक्लैले यसलाई कसरी आफ्नो बनाउन सक्दछन् अर्थात् यो पारिजात इन्द्रको मात्र कसरी भयो? ॥४५॥ हे बगैँचाका सुरक्षाकर्मीहरू! जसरी समुद्रबाट उत्पन्न भएको अमृत, चन्द्रमा र लक्ष्मीको सबैले समान रूपमा उपभोग गरिरहेका छन्, त्यसरी नै यो पारिजात पनि सबैको साझा सम्पत्ति हो अर्थात् यसको पनि सबैले समान रूपमा उपभोग गर्न पाउनुपर्दछ ॥४६॥ आफ्नो पतिको शक्तिका आधारमा अत्यन्त घमण्डी भएकी शचीले यो पारिजातको रूख यहाँबाट लान रोक्न सक्दछिन् भने रोकुन्। तिमीहरू गएर शचीलाई भनिदेऊ कि परमात्मा श्रीहरिकी अत्यन्त प्रिय पत्नी सत्यभामा आफ्नो पतिको बलका आधारमा यसलाई लिएर जान लागेकी छन्। यसमा तिमीले क्षमा गरिरहनुपर्ने कुनै आवश्यकता छैन ॥४७॥ तिमीहरूले अत्यन्त शीघ्रतापूर्वक गएर देवराज इन्द्रकी पत्नी शचीलाई भनिदिनू कि सत्यभामाले अत्यन्त घमण्डका साथ यसो भनिरहेकी छन्। तिमी यदि आफ्नो स्वामीको अत्यन्त प्रिय भएर रहेकी छ्यौ भने र तिमीले आफ्नो स्वामीलाई आफ्नो नियन्त्रणमा राखेकी छ्यौ भने मेरा स्वामीले यो पारिजातको रूखलाई अपहरण गरेर लान लाग्नुभएको छ, तिनीहरू सबैले त्यो रूख लैजानबाट रोक्ने प्रयास गर्नू अर्थात् यो पारिजातलाई अपहरण हुनबाट बचाउनू ॥४८-४९॥ मलाई तिम्रा पति इन्द्र भएको थाहा छ र उनी स्वर्गका अधिपति भएको पनि ज्ञान छ तथा म उनीलाई राम्ररी चिन्दछु। तर पनि म मनुष्य नै भए तापनि यो पारिजातको रूख अपहरण गरेर लैजान लागिरहेकी छु ॥५०॥ **पराशरजीले भन्नुभयो**– सत्यभामाले यसरी बताइसकेपछि बगैँचाका सुरक्षाकर्मीहरूले शचीका नजिकमा सत्यभामाद्वारा बताइएका सबै कुराहरू स्पष्ट रूपमा बताइदिए। त्यस सम्बन्धमा शचीले पनि आफ्ना पति देवराज इन्द्रलाई अत्यन्त उत्साहित बनाइन् ॥५१॥ हे ब्राह्मणश्रेष्ठ! त्यसपछि देवराज इन्द्र सम्पूर्ण देवसेनाहरूलाई साथमा लिएर पारिजातको रूखलाई फर्काएर ल्याउनका लागि परमात्मा श्रीकृष्णसँग युद्ध गर्न अत्यन्त उत्साहित भएर निस्किए अर्थात् प्रस्थान गरे ॥५२॥ यसपछि देवराज

ततः परिघ–निस्त्रिंश–गदा शूल–वरायुधाः।

बभूवुस्त्रिदशाः सज्जाः शक्रे वज्रकरे स्थिते ॥५३॥

ततो निरीक्ष्य गोविन्दो नागराजोपरि स्थितम्।

शक्रं देवपरीवारं युद्धाय समुपस्थितम् ॥५४॥

चकार शङ्खनिर्घोषं दिशः शब्देन पूरयन्।

मुमोच शरसङ्घातान् सहस्रायुतशः शितान् ॥५५॥

ततो दिशो नभश्चैव दृष्ट्वा शरशतैश्चितम्।

मुमुचुस्त्रिदशाः सर्वे अस्त्रशस्त्राण्यनेकशः ॥५६॥

एकैकमस्त्रं शस्त्रञ्च देवैर्मुक्तं सहस्रधा।

चिच्छेद लीलयैवेशो जगतां मधुसूदनः ॥५७॥

पाशं सलिलराजस्य समाकृष्योरगाशनः।

चकार खण्डशश्चञ्च्वा बालपन्नगदेहवत् ॥५८॥

यमेन प्रहृतं दण्डं गदाविक्षेपखण्डितम्।

पृथिव्यां पातयामास भगवान् देवकीसुतः ॥५९॥

शिविकाञ्च धनेशस्य चक्रेण तिलशो विभुः।

चकार शौरिरर्कञ्च दृष्टिदृष्टहतौजसम् ॥६०॥

नीतोग्निः शीततां बाणैर्द्राविता वसवो दिशः।

चक्रविच्छिन्नशूलाग्रा रुद्रा भुवि निपातिताः ॥६१॥

इन्द्रले आफ्नो हातमा वज्र लिइसकेपछि अन्य सबै देवताहरू पनि परिघ अर्थात् फलामले बाँधेको डन्डा, निस्त्रंश अर्थात् तरवार, गदा र त्रिशूलजस्ता अत्यन्त उत्तम अस्त्र–शस्त्रहरूबाट पूर्ण रूपमा सुसज्जित भए ॥५३॥ त्यसपछि अत्यन्त उत्तम ऐरावत हात्तीमा अवस्थित एवम् देवसेनाबाट पूर्ण रूपमा वेष्टित भएर अर्थात् घेरिएर इन्द्र युद्ध गर्नका लागि अत्यन्त उत्साहित भएर आएको थाहा पाएर अर्थात् देख्नु भएर... ॥५४॥ परमात्मा श्रीगोविन्दले आफ्नो अत्यन्त उत्तम पाञ्चजन्य नाम भएको शङ्ख अति उच्च स्वरमा बजाउनु भयो र आफ्नो शार्ङ्ग नाम भएको उत्तम धनुषको टङ्कारबाट सबै दिशाहरूलाई गुञ्जायमान बनाउँदै एकैपटक लाखौं–हजारौं अत्यन्त तीखा बाणहरूको वर्षा गराउनु भयो ॥५५॥ त्यसपछि यसरी सम्पूर्ण दिशाहरू र आकाशलाई बाणहरूले पूर्ण रूपमा ढाकेको देखेर देवताहरूले अनेकौं किसिमका अस्त्रशस्त्रहरू वर्षाउन थाले ॥५६॥ त्रिलोकका अधिपति परमात्मा श्रीकृष्णले पनि देवताहरूले छाडेका अर्थात् प्रहार गरेर अस्त्र–शस्त्रहरूलाई लीलाका माध्यमद्वारा एक–एक बाणलाई हजार–हजार टुक्रा पारिदिन थाल्नु भयो ॥५७॥ सर्पको भोजन गर्ने गरुडले पनि पानीका अधिपति वरूणको पाशलाई तानेर सर्पका बच्चाहरूलाई जसरी नै टुक्रा–टुक्रा बनाउन थाले ॥५८॥ देवी देवकीको पुत्रका रूपमा उत्पन्न हुनुभएका अर्थात् अवतार लिनुभएका भगवान् श्रीकृष्णले पनि यमराजद्वारा प्रहार गरिएको दण्डलाई आफ्नो गदाको फँकाइबाट टुक्रा–टुक्रा पारेर पृथ्वीमा झारिदिनु भयो ॥५९॥ तथा परमात्मा श्रीकृष्णले आफ्नो सुदर्शन चक्रको प्रहार गरेर कुबेरको पाल्कीलाई तिलका दाना बराबर छिन्नभिन्न पारिदिनुभयो र दृष्टिपातबाटै अर्थात् हेरेर नै सूर्यलाई पनि तेजोहीन अर्थात् निस्तेज बनाइदिनुभयो ॥६०॥ त्यसपछि भगवान्ले एक सय बाणहरूद्वारा अग्निलाई पनि पूर्ण रूपमा शक्तिहीन बनाइदिनु भयो। वसुहरू अनेकौं दिशाहरूमा भाग्न थाले। परमात्मा श्रीकृष्णको सुदर्शन चक्रबाट आ–आफ्ना त्रिशुलहरूको टुप्पो झारिदिएकाले शक्तिहीन भएका रुद्रहरू क्रमबद्ध रूपमा पृथ्वीमा झर्न थाले अर्थात् पृथ्वीमा लडे ॥६१॥

साध्या विश्वेऽथ मरुतो गन्धर्वाश्चैव सायकैः ।

शार्ङ्गिणा प्रेरितैरस्ता व्योम्नि शाल्मलितूलवत् ॥६२॥

गरुत्मानपि वक्त्रेण पक्षाभ्यां च नखाङ्कुरैः ।

भक्षयंस्ताडयन् देवान् दारयंश्च चचार वै ॥६३॥

ततः शरसहस्रेण देवेन्द्र–मधुसूदनौ ।

परस्परं ववर्षाते धाराभिरिव तोयदौ ॥६४॥

ऐरावतेन गरुडो ययुधे तत्र संयुगे ।

देवैः समस्तैर्युयुधे शक्रेण च दनार्दनः ॥६५॥

छिन्नेष्वशेषवाणेषु शस्त्रेष्वस्त्रेषु च त्वरन् ।

जग्राह वासवो वज्रं कृष्णाश्चक्रं सुदर्शनम् ॥६६॥

ततो हाहाकृतं सर्वं त्रैलोक्यं द्विजसत्तम ।

वज्र–चक्रधरौ दृष्ट्वा देवराज–जनार्दनौ ॥६७॥

क्षिप्तं वज्रमथेन्द्रेण जग्राह भगवान् हरिः ।

न मुमोच तदा चक्रं शक्रं तिष्ठेति चाब्रवीत् ॥६८॥

प्रणष्टवज्रं देवेन्द्रं गरुडक्षतवाहनम् ।

सत्यभामाऽब्रवीद् वीरं पलायनपरायणम् ॥६९॥

त्रैलोक्येश! न ते युक्तं शचीभर्तुः पलायनम् ।

पारिजातस्रगाभोगा त्वामुपस्थास्यते शची ॥७०॥

कीदृशं देवराज्यन्ते पारिजातस्रगुज्जलाम् ।

अपश्यतो यथापूर्वं प्रणयादागतां शचीम् ॥७१॥

साध्य, वसु, विश्वदेव, गन्धर्वहरू पनि परमात्मा श्रीकृष्णको बाणको पीडाले अत्यन्त पीडित भएर सिमलको भुवा उडे जसरी नै आकाशमा उड्न थाले अर्थात् आकाशमा नै विलीन भए ॥६२॥ भगवान्सँगै गरुड पनि आफ्नो चुच्चा, पखेटाहरू र नङ्ग्राहरूले देवताहरूलाई टोक्दै, हिर्काउँदै र तितर–वितर अर्थात् छिनभिन्न पार्दै घुमफिर गर्न थाले ॥६३॥ त्यसपछि अविरल धाराहरूका रूपमा पानी वर्षाउने मेघ अर्थात् बादलका जसरी नै परमात्मा श्रीमधुसूदन र देवराज इन्द्रले आपसमा हजारौं बाणहरूको वर्षा गराउन थाले ॥६४॥ यस भयानक युद्धमा गरुडले ऐरावत हात्तीसँग र एक्लो परमात्मा श्रीकृष्णले देवराज इन्द्रसहित सम्पूर्ण देवताहरूसँग युद्ध गर्नुभएको थियो ॥६५॥ अनेकौं किसिमका अश्त्र–शस्त्रहरूको पूर्ण रूपमा विनाश भइसकेको देखेर देवराज इन्द्रले अन्त्यमा शीघ्रतापूर्वक आफ्नो वज्र हातमा लिए । त्यसपछि परमात्मा श्रीकृष्णले पनि आफ्नो सुदर्शनचक्र धारण गर्नुभयो अर्थात् हातमा लिनुभयो ॥६६॥ हे ब्राह्मणश्रेष्ठ! देवराज इन्द्रले वज्र र परमात्मा श्रीजनार्दनले सुदर्शन चक्र हातमा लिनु भएको देखेर सम्पूर्ण त्रिलोकमा अत्यन्त भयानक हाहाकार अर्थात् कोलाहल मच्चिन थाल्यो ॥६७॥ त्यस समयमा देवराज इन्द्रद्वारा प्रहार गरिएको वज्रलाई आफ्नो हातले समाउनु भएर भगवान्ले आफ्नो सुदर्शन चक्र न छोड्दै इन्द्रसँग भन्नुभयो–"देवराज इन्द्र पर्ख" ॥६८॥ त्यसपछि जसको अत्यन्त उत्तम वाहन ऐरावतलाई गरुडले पूर्ण रूपमा क्षतविक्षत बनाइदिएका थिए, ती अत्यन्त पराक्रमी देवराज इन्द्रलाई आफ्नो सर्वोत्तम अस्त्र वज्रविहीन भएको देखेर उनीसँग सत्यभामाले भनिन् ॥६९॥ हे त्रैलोकेश्वर अर्थात् देवराज इन्द्र! तपाईं शचीको पति हुनुहुन्छ, तपाईंले यसरी युद्धबाट पलायन हुन अर्थात् भाग्न उचित हुँदैन। तपाईं यहाँबाट नभाग्नुहोस्, पारिजातको फूलको माला लगाएर पूर्ण रूपमा सजिएकी शची अत्यन्त चाँडै तपाईंलाई भेट्न आउनेछिन् ॥७०॥ पारिजातको फूलको माला लगाएर उज्ज्वल कान्ति अर्थात् अनुहार भएकी प्रेममा पूर्ण रूपमा अन्धी भएकी शची जसरी तपाईंको सामीप्यमा आउँथिन्, यस समयमा उनको त्यो रूप नदेख्दा के तपाईंलाई देवराजत्वको सुख प्राप्त हुन सक्दछ? ॥७१॥ हे देवराज इन्द्र! अब तपाईंले धेरै परिश्रम गरिरहन आवश्यक छैन र लज्जित पनि हुनुपर्दैन । तपाईं यो पारिजातको रूख लिएर

अलं शक्र! प्रयातेन न ब्रीडां गन्तुमर्हसि।
नीयतां पारिजातोऽयं देवाः सन्तु गतव्यथाः ॥७२॥
पतिगर्वावलेपेन बहुमानपुरःसरम्।
न ददर्श गृहे यातामुपचारेण मां शची ॥७३॥
स्त्रीत्वादगुरुचित्ताहं स्वभर्तृश्लाघनापरा।
ततः कृतवती शक्र भवता सह विग्रहम् ॥७४॥
तदलं पारिजातेन परस्वेन हृतेन नः।
रूपेण गर्विता सा तु भर्त्रा का स्त्री न गर्विता ॥७५॥

पराशर उवाच

इत्युक्तो विनिवृत्तोऽसौ देवराजस्तथा द्विज।
प्राह चैनामलं चण्डि! सख्युः खेदातिविस्तरैः ॥७६॥
न चापि सर्ग–संहार–स्थितिकर्ताखिलस्य यः।
जितस्य तेन मे ब्रीडा जायते विश्वरूपिणा ॥७७॥
यस्माद् जगत् सकलमेतदनादिमध्या–
द्यस्मिन् यतश्च न भविष्यति सर्वभूतात्।
तेनोद्भव–प्रलय–पालनकारेण
व्रीडा कथं भवति देवि! निराकृतस्य ॥७८॥
सकलभुवनमूर्तिरत्यन्तसूक्ष्मा
विदितसकलवेदैर्ज्ञायते यस्य नान्यैः।
तमजमकृतमीशं शाश्वतं स्वेच्छयैनं
जगदुपकृतिमर्त्यं को विजेतुं समर्थः ॥७९॥

जानुहोस्। यसलाई प्राप्त गरेपछि देवताहरूको दुःख पूर्ण रूपमा शान्त हुन्छ अर्थात् त्यो दुःख सुखमा परिणत हुन्छ ॥७२॥ आफ्ना पतिको पराक्रमका आधारमा अत्यन्त घमण्डी भएकी शचीले आफ्ना घरमा अतिथिका रूपमा आएकी मलाई सम्मानपूर्वक नहेरी अपमानपूर्वक हेरेकी थिइन् अर्थात् उनले मसँग अपहेलित व्यवहार गरेकी थिइन् ॥७३॥स्त्री भएका कारणले गर्दा मेरो अन्तरात्मा पनि अधिक गम्भीर छैन। त्यसकारण मैले शचीलाई आफ्नो पतिको शक्ति देखाइदिनका लागि मात्र तपाईंसँग यो युद्ध गर्ने योजना बनाएकी थिएँ ॥७४॥ हे देवराज इन्द्र! यो अर्काको पारिजातलाई अपहरण गर्नाले मलाई के लाभ हुन्छ? शचीले आफ्नो रूप र आफ्ना पतिको पराक्रममा अत्यन्त घमण्ड गरिरहेकी छन्। यस्ती कुन स्त्री हुन्छे, जो यस अवस्थामा घमण्ड नगरोस् ॥७५॥पराशरजीले भन्नुभयो – हे ब्राह्मणश्रेष्ठ! सत्यभामाका यस प्रकारका कुरा सुनिसकेपछि देवराज इन्द्रले अत्यन्त शान्त भावमा भने – म हजुरको मित्र हुँ। त्यसकारण तपाईंले मप्रति यस किसिमको खेदको विस्तार नगरिदिनुहोस् ॥७६॥ जुन परमात्माले यी तीनोटै लोकहरूको उत्पत्ति, पालन र संहार गर्नुहुन्छ, म उहाँ विश्वरूप भगवान्‌बाट पराजित भएको छु। त्यसकारण मैले यो युद्धमा पराजय भोग्नुपर्दा मलाई कुनै किसिमको लज्जाको अनुभूति भएको छैन ॥७७॥ हे देवी! जसको आदि अन्त्य र मध्य छैन, उहाँ परमात्माबाटै यो सम्पूर्ण त्रिलोक उत्पन्न भएको र उहाँकै एक अंशको अत्यन्त सानो भागमा अवस्थित रहेको छ; जसबाट यो सम्पूर्ण जीवमय जगत् उत्पन्न भयो तथा जसद्वारा प्रलयका समयमा यो सम्पूर्ण जगत् कुनै पनि अंश बाँकी नराखी आफैंमा अर्थात् स्वयं परमात्मामा विलीन गराउनुहुन्छ; उहाँ सृष्टिको उत्पत्ति, पालन र संहारकर्ता परमात्माबाट पराजित हुँदा मैले लज्जित हुनुपर्ने कुनै कारण नै छैन ॥७८॥ जो सम्पूर्ण वेदहरूको ज्ञाता हुनुहुन्छ। उहाँले नै सबै भुवनहरूका उत्पत्तिकर्ता परमात्माको अज्ञेय मूर्ति कस्तो किसिमको छ, त्यसलाई जान्नुहुन्छ तर अन्य कसैले जान्न सक्दैन। उहाँ अजन्मा, कर्मविहीन, शाश्वत र आफ्नो इच्छा अनुसार संसारको कल्याण गर्नका लागि मनुष्य शरीर धारण गर्नुभएका परब्रह्म परमात्मालाई कुन व्यक्तिले पराजित गर्न सक्दछ ? ॥७९॥

इति श्रीविष्णुपुराणे पञ्चमांशे त्रिंशोऽध्यायः।

ॐ

## एकत्रिंशोऽध्यायः

## अध्याय – ३१

### "श्रीभगवतो द्वारकापुरीप्रत्यावर्तनम्, शताधिकषोडशसहस्रमणीभिः सह विवाहश्च"

(भगवान्‌को द्वारकामा आगमन तथा सोह्र हजार एक सय सुन्दरीहरूसँग सामुहिक विवाह)

**पराशर उवाच**

**संस्तुतो भगवानित्थं देवराजेन केशवः**

**प्रहस्य भावगम्भीरमुवाचेदं द्विजोत्तम ॥१॥**

**श्रीकृष्ण उवाच**

**देवराजो भवानिन्द्रो वयं मर्त्या जगत्पते ।**

**क्षन्तव्यं भवता चेदमपराधकृतं मम ॥२॥**

**पारिजाततरुश्चायं नीयतामुचितास्पदम् ।**

**गृहीतोऽयं मया शक्र! सत्यावचनकारणात् ॥३॥**

**वज्रञ्चेदं गृहाण त्वं यत्त्वया प्रहितं मयि ।**

**तवैवैतत् प्रहरणं शक्र! वैरिविदारणम् ॥४॥**

**शक्र उवाच**

**विमोहयसि मामीश! मर्त्योऽहमिति किं वदन् ।**

**जानीमस्त्वां भगवतो न तु सूक्ष्मविदो वयम् ॥५॥**

**योऽसि सोऽसि जगत्त्राणप्रवृत्तौ नाथ! संस्थितः ।**

**जगतः शल्यनिष्कर्षं करोष्यसुरसूदन ॥६॥**

**पराशरजीले भन्नुभयो** – हे ब्राह्मणश्रेष्ठ! देवराज इन्द्रले यसप्रकार परमात्माको स्तुति गरिसकेपछि अत्यन्त गम्भीर भावमा हाँस्दै भगवान्‌ले इन्द्रसँग भन्नुभयो ... ॥१॥ **परमात्मा श्रीकृष्णले भन्नुभयो**– हे जगत्पति! तपाईं देवराज इन्द्र हुनुहुन्छ र म मृत्युलोकमा जन्मिएको साधारण मनुष्य हुँ । त्यसकारण मबाट जुन किसिमको अपराधजन्य कार्य भयो, त्यसका लागि तपाईंले क्षमा गरिदिनु होला ॥२॥ तपाईंले यो पारिजातको रूखलाई यसको उपयुक्त स्थानमा लगिदिनुहोस् । मैले त यसलाई सत्यभामाका वचनको सम्मान गर्नका लागि मात्र उठाएर ल्याएको थिएँ ॥३॥ तथा तपाईले ममाथि जुन वज्र प्रहार गर्नुभएको थियो, त्यो वज्र पनि फिर्ता लैजानुहोस् । किनकि हे देवराज इन्द्र! यो शत्रुहरूको पूर्ण रूपमा सर्वनाश गराइदिने अस्त्र तपाईंकै लागि योग्य छ ॥४॥ **इन्द्रले भने**– हे परमात्मा! म मर्त्यलोकको साधारण मनुष्यमात्र हुँ भनेर हजुरले मलाई किन आफ्नो योगमायाको पर्दाभित्र राख्न खोजिरहनु भएको छ? हे भगवान्! हजुरको यो सगुण साकार स्वरूपका विषयमा मलाई ज्ञान हासिल भइसकेको छ, म हजुरको सूक्ष्मस्वरूपका विषयमा पूर्ण रूपमा अनभिज्ञ छु अर्थात् त्यो स्वरूपलाई मैले जानेको छैन ॥५॥ हे नाथ! हजुर जस्तो हुनुहुन्छ, त्यही हुनुहुन्छ । मलाई ज्ञान भए अनुसार हे दैत्यसंहारकर्ता परमात्मा! जगत्‌को रक्षा गर्नका लागि मात्र हजुरले यो मनुष्य शरीर धारण गर्नुभएको हो । त्यही लक्ष्य अनुसार हजुरले जगत्‌मा अशान्ति मच्चाउने सबै दुष्टहरूको विनाश गरिदिएर शान्ति स्थापना गरिदिनुहुन्छ ॥६॥ हे कृष्ण! यस पारिजातको रूखलाई तपाईंले आफूले निवास गर्नुभएको अत्यन्त पवित्र

नीयतां पारिजातोऽयं कृष्ण! द्वारवतीं पुरीम्।

मर्त्यलोके त्वया त्यक्ते नायं संस्थास्यते भुवि ॥७॥

पराशर उवाच

तथेत्युक्त्वा च देवेन्द्रमाजगाम भुवं हरिः।

प्रसक्तैः सिद्ध–गन्धर्वैः स्तूयमानस्तथर्षिभिः ॥८॥

ततः शङ्खमुपाध्माय द्वारकोपरि संस्थितः।

हर्षमुत्पादयामास द्वारकावासिनां द्विज ॥९॥

अवतीर्याथ गरुडात् सत्यभामासहायवान्।

निष्कुटे स्थापयामासा पारिजातं महातरुम् ॥१०॥

यमभ्येत्य जनः सर्वो जातिं स्मरति पौर्विकीम्।

वास्यते यस्य पुष्पोत्थगन्धेनोर्वी त्रियोजनम् ॥११॥

ततस्ते यादवाः सर्वे देहबन्धानमानुषान्।

ददृशुः पादपे तस्मिन् कुर्वन्तो मुखदर्शनम् ॥१२॥

किङ्करैः समुपानीतं हस्त्यश्वादि ततो धनम्।

स्त्रियश्च कृष्णो जग्राह नरकस्य परिग्रहान् ॥१३॥

ततः काले शुभे प्राप्ते उपयेमे जनार्दनः।

ताः कन्या नरकेणासन् सर्वतो याः समाहृताः॥१४॥

द्वारकापुरीमा लैजानुहोस्। तर जब हजुरले मर्त्यलोकको त्याग गर्नुहुनेछ, त्यसपछि यो पारिजातको रूख संसारमा रहने छैन अर्थात् यो त्यहाँबाट फिर्ता आउनेछ ॥७॥ **पराशरजीले भन्नुभयो**–त्यसपछि परमात्मा श्रीकृष्णले इन्द्रसँग तपाईंको कामना अनुसार नै हुनेछ भन्नुभएर फर्किएर पृथ्वीमा आउनुभयो। उहाँ पृथ्वीमा आउँदाका समयमा सिद्ध, गन्धर्व र ऋषिहरूले उहाँको प्रार्थना गरिरहेका थिए ॥८॥ हे ब्राह्मणश्रेष्ठ! त्यसपछि द्वारकामाथि आकाशमार्गमा विराजमान हुनुभएर आफ्नो पाञ्चजन्य शङ्ख बजाउँदै परमात्मा श्रीकृष्णले द्वारकाका बासिन्दाहरूलाई अत्यन्त आनन्दित गराउनुभयो अर्थात् उनीहरूलाई आफू आएको सूचना दिएर हर्षित बनाउनुभयो ॥९॥ त्यसपछि आफ्नी पटरानी सत्यभामासहित परमात्मा श्रीकृष्ण गरुडबाट ओर्लनुभयो तथा इन्द्रको बगैँचाबाट ल्याएको पारिजातको रूखलाई सत्यभामाको महलमा रहेको बगैँचामा स्थापित गरिदिनुभयो अर्थात् रोपिदिनुभयो ॥१०॥ यो पारिजातको रूख आएपछि सबै मनुष्यहरूले आ–आफ्नो पहिलो जन्मको विस्तृत विवरण स्मरण गर्न अर्थात् सबै कुरा सम्झन सक्दछन् र यसको फूलको सुगन्धबाट तीन योजनसम्मको क्षेत्रफल यथार्थरूपमा सुगन्धित हुन्छ॥११॥ त्यसपछि सम्पूर्ण यादवहरू अत्यन्त आदरपूर्वक त्यो अत्यन्त अदुभुद् एवं पवित्र पारिजातको रूखका नजिकमा गएर ऐनामा जसरी नै आ–आफ्नो अनुहार हेर्न थाले र आफ्नो शरीर देवताहरूको शरीर जस्तो देख्न थाले अर्थात् सम्झन थाले ॥१२॥ त्यसपछि परब्रह्म परमात्मा श्रीकृष्णले आफ्ना सेवकहरूद्वारा ल्याइएका नरकासुरका हात्ती, घोडा र धन एवं ऊद्वारा अपहरण गरेर आफ्नो महलमा बन्दी बनाइएका सबै स्त्रीहरूलाई पनि ग्रहण गर्नुभयो अर्थात् स्वीकार गर्नुभयो ॥१३॥ त्यसपछि शुभ समय आएपछि नरकासुरद्वारा अनेकौं देशहरूबाट अपहरण गरेर ल्याइएका तथा आफ्नो घरमा राखिएका ती कन्याहरूसँग परब्रह्मपरमात्मा श्रीजनार्दनले विवाह गर्नुभयो ॥१४॥ हे बुद्धिमान् ब्राह्मण! यो अत्यन्त

एकस्मिन्नेव गोविन्दः काले तासां महामते।

जग्राह विधिवत् पाणीन् पृथग्गेहेषु धर्मतः ॥१५॥

षोडशस्त्रीसहस्त्राणि शतमेकं तथाधिकम्।

तावन्ति चक्रे रूपाणि भगवान् मधुसूदन ॥१६॥

एकैकमेव ताः कन्या मेनिरे मधुसूदन।

ममैव पाणिग्रहणं भगवान् कृतवानिति ॥१७॥

निशासु च जगत्स्रष्ट्य तासां गेहेषु केशवः

उवास विप्र! सर्वासां विश्वरूपधरो हरिः ॥१८॥

आश्चर्यजनक विषय रहेको छ कि परमात्मा गोविन्दले एकै समयमा अलग–अलग घरमा ती सबै कन्याहरूसँग वेदोक्त विधिअनुसार विवाह गर्नुभयो ॥१५॥ सोन्ह हजार एक सय कन्याहरूसँग विवाह गर्दाका समयमा परमात्मा श्रीमधुसूदनले त्यति नै स्वरूप धारण गर्नुभएको थियो अर्थात् स्वयं सोन्ह हजार एक सय हुनुभएको थियो ॥१६॥ त्यस समयमा ती सबै कन्याहरूले आ–आफ्ना मनमा स्वयं परमात्मा श्रीमधुसूदनले नै हामीहरूसँग विवाह गरिरहनु भएको छ भन्ने निश्चय गरिरहेका थिए अर्थात् उनीहरू परमात्मासँगै आफ्नो विवाह भएको सम्फिरहेका थिए ॥१७॥ हे ब्राह्मणश्रेष्ठ! प्रत्येक रात्रिका समयमा विश्वरूप धारण गर्नुहुने सम्पूर्ण जगत्का रचयिता परमात्मा केशव श्रीहरि उनीहरू प्रत्येकका घर–घरमा गएर निवास गर्न अर्थात् बस्न थाल्नुभयो ॥१८॥

इति श्रीविष्णुमहापुराणे पञ्चमांशे एकत्रिंशोऽध्यायः।



## द्वाविंशोऽध्यायः

## अध्याय –३२

### "उषाचरितम्"

(उषाको चरित्र)

पराशर उवाच

प्रद्युम्नाद्या हरेः पुत्रा रुक्मिण्याः कथितास्तव।

भानुं भौमरिकञ्चैव सत्यभामा व्यजायत ॥१॥

दीप्तिमत्ताम्रपक्षाद्या रोहिण्यां तनया हरेः।

बभूवूर्जाम्बवत्याञ्च साम्बाद्या बलशालिनः ॥२॥

तनया भद्रविन्दाद्या नाग्नजित्यां महाबलाः।

सङ्ग्रामजित्प्रधानास्तु शैव्यायान्त्वभवन् सुताः ॥३॥

वृकाद्यांश्च सुतान् माद्र्यां गात्रवत्प्रमुखान् सुतान्।

अवाप लक्ष्मणा पुत्रान् कालिन्द्याश्च श्रुतादयः ॥४॥

अन्यासाञ्चैव भार्य्याणां समुत्पन्नानि चक्रिणः।

अष्टायुतानि पुत्राणां सहस्राणां शतं तथा ॥५॥

प्रद्युम्नः प्रथमस्तेषां सर्वेषां रुक्मिणीसुतः।

प्रद्युम्नादनिरुद्धोऽभूद् वज्रस्तस्मादजायत ॥६॥

अनिरुद्धो रणेऽरुद्धो बलेः पौत्रीं महाबलः।

बाणस्य तनयामूषांमुपयेमे द्विजोत्तम ॥७॥

**पराशरजीले भन्नुभयो** – रुक्मिणीका गर्भबाट उत्पन्न भएका परमात्मा श्रीकृष्णका प्रद्युम्न आदि जुन सबै पुत्र उत्पन्न भएका थिए, तिनीहरूका विषयमा तिमीलाई मैले यसभन्दा पहिले नै बताइसकेको छु। सत्यभामाका गर्भबाट श्रीकृष्णका पुत्ररत्नका रूपमा भानु र भौमरिक नाम भएका दुई पुत्र उत्पन्न भए ।।१।। परमात्मा श्रीहरिका पुत्ररत्नका रूपमा रोहिणीका गर्भबाट पनि दीप्तिमान् आदि अनेकौं शक्तिशाली पुत्रहरू उत्पन्न भए। यसरी जाम्बवतीका गर्भबाट पनि साम्ब आदि अनेकौं शक्तिशाली पुत्रहरू उत्पन्न भएका थिए।।२।। यसरी नै परमात्मा श्रीकृष्णका पुत्ररत्नका रूपमा नाग्नजिती अर्थात् सत्याका गर्भबाट अत्यन्त पराक्रमशाली भद्रविन्द आदि एवम् शैव्याका गर्भबाट संग्रामजित् जस्ता धेरै पुत्रहरू उत्पन्न भएका थिए ।।३।। यसैगरी परमात्मा श्रीकृष्णका पुत्ररत्नका रूपमा माद्रीका गर्भबाट वृक आदि अनेकौं सन्तानहरू उत्पन्न भएका थिए तथा लक्ष्मणा नाम भएकी परमात्माकी पत्नीको गर्भबाट गात्रवान् आदि नाम भएका पुत्रहरू र कालिन्दीको गर्भबाट पनि श्रुत आदि अनेकौं पुत्रहरू उत्पन्न भएका थिए।।४।। शुदर्शनचक्र धारण गर्नुहुने परमात्मा श्रीकृष्णका अन्य पत्नीहरूबाट एक लाख असी हजार पुत्रहरू उत्पन्न भएका थिए।।५।। परमात्मा श्रीकृष्णका यी सबै पुत्रहरूमध्ये रुक्मिणीका पुत्ररत्न प्रद्युम्न सबैभन्दा जेठा थिए। प्रद्युम्नका पुत्ररत्नका रूपमा अनिरुद्ध उत्पन्न भएका थिए। यी अनिरुद्धका वज्र नाम भएका एक पुत्र उत्पन्न भएका थिए ।।६।। हे ब्राह्मणश्रेष्ठ! अत्यन्त पराक्रमशाली अनिरुद्धको विवाह बाणासुरकी छोरी एवम् बलिकी नातिनी उषासँग भएको थियो। यसै कारणले गर्दा राजा बाणासुरले अनिरुद्धलाई युद्धमा पराजित गरेर आफ्नो बन्दीगृह अर्थात् कारागारमा थुनिदिएका थिए ।।७।। यसै विषयका आधारमा

यत्र युद्धमभूद् घोरं हरि–शङ्करयोर्महत्।

छिन्नं सहस्रं बाहूनां यत्र बाणस्य चक्रिणा ॥८॥

मैत्रेय उवाच

कथं युद्धभभूद् ब्रह्मन्नुषार्थे हर–कृष्णयोः।

कथं क्षयञ्च बाणस्य बाहूनां कृतवान् हरिः ॥९॥

एतत् सर्वं महाभाग! समाख्यातुं त्वमर्हसि।

महत् कौतूहलं जातं कथां श्रोतुमिमां हरेः ॥१०॥

पराशर उवाच

उषा बाणसुता विप्र! पार्वतीं सह शम्भुना।

क्रीडन्तीमुपलक्ष्योच्चैः स्पृहाञ्चक्रे तदाश्रयाम्॥११॥

ततः सकलचित्तज्ञा गौरी तामाह भामिनीम्।

अलमर्त्यर्थतापेन भर्त्रा त्वमपि रंस्यसे ॥१२॥

इत्युक्ता सा तदा चक्रे कदेति मतिमात्मनः।

को वा भर्ता ममेत्येतां पुनरप्याह पार्वती ॥१३॥

पार्वत्युवाच

वैशाखशुक्लद्वादश्यां स्वप्ने योऽभिभवं तव।

करिष्यति स ते भर्ता राजपुत्रि! भविष्यति ॥१४॥

पराशर उवाच

तस्यां तिथौ पुमान् स्वप्ने यथा देव्या समीरितम्।

तथैवाभिभवं चक्रे रागञ्चक्रे तथैव सा ॥१५॥

परमात्मा श्रीकृष्ण र भगवान् शङ्करका बीचमा अत्यन्त भयानक युद्ध भएको थियो । यस युद्धमा सुदर्शन चक्र धारण गर्नुहुने परमात्मा श्रीकृष्णले बाणासुरका हजार हातहरू काटिदिनु भएको थियो ॥८॥ **मैत्रेयले भने–** हे ब्रह्मन्! ती बाणासुरकी छोरी उषाका लागि महादेव र परमात्मा श्रीकृष्णका बीचमा किन युद्ध भएको हो र परमात्मा श्रीकृष्णले किन बलिका छोरा बाणासुरका हजार हातहरू काटिदिनु भएको हो? ॥९॥ हे धर्मात्मा! हजुरले यी विषयहरूमा मलाई यथार्थ रूपमा बताइदिनुहोस् । परमात्मा श्रीहरिका यी सबै किसिमका लीलाहरूको कथा सुन्नका लागि मेरो मनमा अत्यन्त कौतुहलता उत्पन्न भएको छ अर्थात् म अत्यन्त उत्साहित भएको छु ॥१०॥ **पराशरजीले भन्नुभयो**– हे ब्राह्मण! बाणासुरकी छोरी उषाले पार्वतीलाई महादेवसँग अत्यन्त आनन्दपूर्वक क्रीडा गरिरहेको देखेपछि आफूले पनि आफ्ना पतिसँग त्यस किसिमले क्रीडा गरेर आनन्दित हुने कामना गरिन् अर्थात् चाहना राखिन् ॥११॥ त्यसपछि सबैको मनोभावका विषयमा पूर्ण रूपमा ज्ञान भएकी महादेव पत्नी पार्वतीले उषासँग भन्नुभयो– हे उषा! तिमीले यसरी चिन्तित भइरहन आवश्यक छैन । किनकि तिमीले पनि समय आएपछि यसरी नै आफ्ना पतिसँग अत्यधिक मनोवाञ्छित क्रीडा गर्दै आनन्दित हुने अवसर पाउनेछ्यौ ॥१२॥ महादेव पत्नी पार्वतीले यसरी बताइदिनु भएपछि उषाले आफ्ना मनमा कुन व्यक्ति मेरो पति होला भन्ने चिन्तन गरिरहेकी थिइन् । त्यसै समयमा पार्वतीले उनलाई भन्नुभयो...॥१३॥ **पार्वतीले भन्नुभयो**– हे राजपुत्रि! वैशाख महिनाको शुक्लपक्षको द्वादशी तिथिमा जुन व्यक्तिले स्वप्नावस्थामा तिमीसँग अनायास रूपमा रतिक्रीडा अर्थात् सम्भोग गर्नेछन्, तिनै पुरूष तिम्रो पति हुनेछन् ॥१४॥ **पराशरजीले भन्नुभयो**–पार्वतीको उपदेशानुसार वैशाख महिनाको शुक्ल पक्षको द्वादशी तिथिमा उषाले स्वप्नावस्थामा आफूसँग कुनै एक पुरुषले अत्यन्त आनन्दपूर्वक रतिक्रीडा अर्थात् सम्भोग गरिरहेको देखिन् तथा उषा पनि त्यो पुरुषप्रति अत्यन्त अनुरागी भइन् अर्थात् अत्यन्त अनुरक्त भइन् ॥१५॥ हे

ततः प्रवुद्धा पुरुषमपश्यन्ती तमुत्सुका।

क्व गतोऽसीति निर्लज्जा मैत्रैयोक्तवती सखीम्॥१६॥

बाणस्य मन्त्री कुम्भाण्डश्चित्रलेखा तु तत्सुता।

तस्याः सख्यभवद् सा च प्राह कोऽयं त्वयोच्यते॥१७॥

यदा लज्जाकुला नास्यै कथयामास सा सती।

तदा विश्वासमानीय सर्वमेवाभ्यवादयत्॥१८॥

विदितार्थान्तु तामाह पुनश्चोषा यथोदितम्।

देव्या तथैव तत्प्राप्तौ योऽभ्युपायः कुरुष्व तम्॥१९॥

पराशर उवाच

ततः पटे सुरान् दैत्यान् गन्धर्वांश्च प्रधानतः।

मनुष्यांश्चाभिलिख्यास्यै चित्रलेखा व्यदर्शयत्॥२०॥

अपास्य सा तु गन्धर्वांस्तथोरगसुरासुरान्।

मनुष्येषु ददौ दृष्टिं तेष्वप्यन्धकवृष्णिषु॥२१॥

कृष्णरामौ विलोक्यासीत् सुभ्रूनर्लज्जाजडेव सा।

प्रद्युम्नदर्शने व्रीडादृष्टिं निन्येऽन्यतो द्विज॥२२॥

मैत्रेय! त्यसपछि उषाले आफू बिउँझिँदाका अवस्थामा त्यो सपनामा आफूसँग अत्यन्त आनन्दपूर्वक सम्भोग गर्ने पुरुषलाई नदेखेपछि त्यस पुरुषप्रति अत्यन्त प्रेमभाव व्यक्त गर्दै पूर्ण रूपमा आसक्त भएर निर्लज्जतापूर्वक आफ्ना साथीहरूलाई लक्षित गर्दै भनिन्- हे नाथ! हे मेरा प्राणप्यारा! तपाईं मलाई यहाँ एक्लै छोडेर कहाँ जानुभयो?॥१६॥ बाणासुरका मन्त्री कुभाण्डकी छोरी चित्रलेखा ती उषाकी अत्यन्त प्रिय एवम् नजिककी सङ्गिनी अर्थात् साथी थिइन्। ती उषाले यसरी ती पुरुषको प्रेममा अत्यन्त आसक्त भएर अलाप-विलाप गर्न लागेको देखेर चित्रलेखाले उनीसँग सोधिन्- हे राजकुमारी उषा! तपाईं कुन पुरुषको कुरा गरिरहनु भएको छ?॥१७॥त्यस समयमा सती राजकुमारी उषाले उनकी सङ्गिनी चित्रलेखालाई केही पनि बताउन सकिनन्। त्यसपछि ती चित्रलेखाले राजकुमारीलाई यस विषयमा आफूले कसैसँग नबताउने विश्वास दिलाइन्। त्यसपछि उषाले आफूमा घटित भएका सबै कुरा चित्रलेखालाई बताइन्॥१८॥त्यसपछि चित्रलेखाले स्वप्नावस्थामा राजकुमारी उषासँग त्यो अदृश्य पुरुषले सम्भोग गरेको कुरा थाहा पाइसकेपछि उषाले देवी पार्वतीले आफूलाई जे-जे बताउनुभएको थियो, त्यो सबै कुरा चित्रलेखालाई बताइदिएर उनले भनिन्- हे प्रिय सङ्गिनी! अब ती पुरुषलाई प्राप्त गर्ने कुनै उपायको खोजी गर॥१९॥ **पराशरजीले भन्नुभयो**-त्यसपछि चित्रलेखाले चित्र बनाउने सामग्रीमा देवता, दैत्य, गन्धर्व र मनुष्यहरूमा मुख्य-मुख्य व्यक्तिहरूको चित्र अर्थात् तस्वीर बनाएर उषालाई देखाउन थालिन्॥२०॥ त्यसपछि उषाले पनि चित्रमा बनाइएका देवता, दैत्य, गन्धर्व र राक्षसहरूलाई पूर्ण रूपमा परित्याग गरेर आफ्नो दृष्टिलाई मनुष्यहरूको चित्रमा स्थापित गरिन् तथा तिनीहरूमा पनि विशेष किसिमले वृष्णिकुलमा मात्र ध्यान दिइन् अर्थात् लक्षित गरिन्॥२१॥ हे ब्राह्मण! त्यसपछि उषा परमात्मा श्रीकृष्ण र अत्यन्त पराक्रमी बलरामको तस्वीरलाई देखेर लाजले गर्दा पानीपानी भइन् तथा प्रद्युम्नको तस्वीरलाई देखेर उनले आफ्नो दृष्टि अर्कातर्फ अर्थात् विपरीत दिशातर्फ फर्काइन्॥२२॥ त्यसपछि हे ब्राह्मण!

**दृष्टमात्रे ततः कान्ते प्रद्युम्नतनये द्विज।**

**दृष्ट्यात्यर्थविलासिन्या लज्जा क्वापि निराकृता॥२३॥**

**सोऽयं सोऽयमितीत्युक्ते तया सा योगगामिनी।**

**ययौ द्वारवतीं चोषां समाश्वास्य ततः सखीम्॥२४॥**

अत्यन्त सुन्दर प्रद्युम्नका पुत्र अनिरुद्धको तस्वीरलाई देखेपछि अत्यन्त प्रसन्न र आश्चर्यमग्न दृष्टि बनाउँदै उषाले आफूमा उत्पन्न भएको लाजलाई पूर्ण रूपमा परित्याग गरिदिइन् अर्थात् अत्यन्त हर्षविभोर भइन्॥२३॥ त्यस समयमा उषाले मैले तिमीलाई बताएको तथा मसँग स्वप्नमा अत्यन्त आनन्दित तुल्याउँदै सम्भोग गर्ने दिव्य पुरुष यिनै हुन् भनेर स्पष्ट रूपमा बताइन्। त्यसपछि चित्रलेखाले उषालाई आश्वासन दिएर अर्थात् सान्त्वना दिएर योगगतिका माध्यमद्वारा द्वारकापुरीमा गइन्॥२४॥

**इति श्रीविष्णुमहापुराणे पञ्चमांशे द्वाविंशोऽध्यायः।**



## त्रयस्त्रिंशोऽध्यायः

## अध्याय – ३३

### "कृष्ण–बाणासुरयोः सङ्ग्रामः"

(परमात्मा श्रीकृष्ण र वाणासुरको युद्ध)

पराशर उवाच

बाणोऽपि प्रणिपत्याग्रे मैत्रेयाह त्रिलोचनम्।

देव! बाहुसहस्रेण निर्विण्णोऽहं विनाहवम् ॥१॥

क्वचिन्ममैषां बाहूनां साफल्यजनको रणः।

भविष्यति विना युद्धं भाराय मम किं भुजैः ॥२॥

श्रीशङ्कर उवाच

मयूरध्वजभङ्गस्ते यदा बाण! भविष्यति।

पिशिताशिजनानन्दं प्राप्स्यसे त्वं तदा रणम् ॥३॥

पराशर उवाच

ततः प्रणम्य मुदितः शम्भुमभ्यागतो गृहम्।

भग्नञ्च ध्वजमालोक्य हृष्टे हर्षान्तरं ययौ ॥४॥

एतस्मिन्नेव काले तु योगविद्याबलेन तम्।

अनिरुद्धमथानिन्ये चित्रलेखा वराप्सरा ॥५॥

कन्यान्तः पुरमध्ये तं रममाणं सहोषया।

विज्ञाय रक्षिणो गत्वा शशंसुर्दैत्यभूपतेः ॥६॥

**पराशरजीले भन्नुभयो**– हे मैत्रेय! प्रचीन कालमा राजा बाणासुरले त्रिलोचन अर्थात् तीनोटा आँखा भएका शिवलाई प्रणाम गरेर भनेको थियो, हे देवादिदेव! युद्ध नगरिकन यी हजार हातहरू प्राप्त गरेकाले म अत्यन्त अशान्त अर्थात् व्याकुल भइरहेको छु ॥१॥ के कुनै समयमा मैले मेरा यी हातहरूलाई सफल बनाउने किसिमको कुनै अत्यन्त भयानक युद्ध गर्ने अवसर पाउनेछु? यदि यस प्रकारको युद्ध गर्ने अवसर प्राप्त हुन सकेन भने मेरा यी हजार हातहरू सारविहीन भइरहने छन् अर्थात् यी हातहरूको कुनै औचित्य रहनेछैन ॥२॥ **भगवान् श्रीशङ्करले भन्नुभयो**–हे बाणासुर! जब तिम्रो मयूरध्वज तोडिनेछ, त्यस समयमा तिमीले रगत पिउने अर्थात् मासुको भोजन गर्ने यक्ष, पिशाच आदिका लागि अत्यन्त आनन्ददायक युद्ध गर्ने अवसर पाउनेछौ अर्थात् त्यस समयमा तिमीले आफ्ना हजार हातहरूको सदुपयोग गर्ने अवसर पाउनेछौ ॥३॥ **पराशरजीले भन्नुभयो** – त्यसपश्चात् भगवान् शिवका यस प्रकारका कुरा सुनिसकेपछि अत्यन्त प्रसन्न भएको बाणासुर शिवजीलाई आदरपूर्वक प्रणाम गरेर आफ्नो घरमा आयो। त्यसपछि एकदिन आफ्नो मयूरको चिन्ह भएको ध्वजा तोडिएको अर्थात् टुटेको देखेर ऊ अतिशय आनन्दित भयो ॥४॥ यसै समयमा अत्यन्त उत्तम अप्सरा चित्रलेखाले आफूमा भएको योगविद्याको बलका माध्यमद्वारा प्रद्युम्नका पुत्ररत्न अनिरुद्धलाई उषाको सामीप्यमा अर्थात् नजिकमा लिएर गएकी थिइन् ॥५॥ त्यसपछि राजकुमारीको निजी खोपीमा उषासँग अनिरुद्धलाई रतिक्रीडा अर्थात् सम्भोग कार्यमा अत्यन्त आनन्दपूर्वक लागिरहेका देखेपछि त्यहाँ रहेका सुरक्षाकर्मीहरूले दैत्यराज बाणासुरका नजिकमा गएर त्यहाँ भित्र भइरहेको सबै कुरा विस्तारपूर्वक बताइदिए ॥६॥ त्यस

आदिष्टं किङ्कराणान्तु सैन्यं तेन दुरात्मना।

जघान परिघं लौहमायदाय परवीरहा ॥७॥

हतेषु तेषु बाणोऽपि रथस्थस्तद्वधोद्यतः।

युध्यमानो यथाशक्ति यदा वीर्येण निर्जितः ॥८॥

मायया युयुधे तेन स तदा मन्त्रिचोदितः।

ततस्तं पन्नगास्त्रेण बबन्ध यदुनन्दनम् ॥९॥

द्वारवत्यां क्व यातोऽसावनिरुद्धेति जल्पताम्।

यदूनामाचचक्षे तं बद्धं बाणेन नारदः ॥१०॥

तं शोणितपुरे श्रुत्वा नीतं विद्याविदग्धया।

योषिता प्रत्ययं जग्मुर्यादवा नामरैरिति ॥११॥

ततो गरुडमारुह्य स्मृतमात्रागतं हरिः।

बल–प्रद्युम्नसहितो बाणस्य प्रययौ पुरम् ॥१२॥

पुरीप्रवेशे प्रमथैर्युद्धमासीन्महात्मनः।

ययौ बाणपुराभ्यासं नीत्वा तान् संक्षयं हरिः ॥१३॥

समयमा ती सुरक्षाकर्मीहरूले त्यो दुष्टात्मा बाणासुरबाट युद्ध गर्ने आदेश पाएका कारणले अनिरुद्धमाथि आक्रमण गरे। त्यसपछि शत्रुहरूको पूर्ण रूपमा विनाश गर्ने शक्ति भएका अनिरुद्धले पनि फलामले बाँधेको दण्डले हिर्काएर तिनीहरूको वध गर्न आरम्भ गरे अर्थात् तिनीहरूलाई मार्न थाले ॥७॥ यसपछि अनिरुद्धद्वारा ती सबै सैनिकहरू मारिइसकेपछि अनिरुद्धको वध गर्नका लागि पूर्ण रूपमा तयार भएको बाणासुर आफ्नो रथमा विराजमान भएर त्यहाँ आइपुग्यो र आफ्नो सम्पूर्ण शक्ति लगाएर युद्ध गर्दा पनि अनिरुद्धलाई पराजित गर्न असमर्थ भयो अर्थात् ऊ आफैं पराजित भयो ॥८॥ त्यसपछि उसले आफ्ना मन्त्रीहरूले दिएको सल्लाह अनुसार अनिरुद्धसँग विभिन्न किसिमका मायामय अर्थात् मायालाई आधार मानेर युद्ध गर्न आरम्भ गर्‍यो र सर्पमयपासो अर्थात नागपाशद्वारा यदुकुलका कुलभूषण अनिरुद्धलाई बाँध्न सफल भयो ॥९॥ त्यसपछि द्वारकापुरीमा अनिरुद्ध कहाँ गए, यसप्रकारको कुराकानी आरम्भ भएपछि देवर्षि नारदले त्यहाँ गएर अनिरुद्ध बाणासुरद्वारा सर्पको पासोद्वारा बाँधिएर रहेको सुनाइदिए ॥१०॥ देवर्षि नारदबाट योगविद्यामा अत्यन्त सिपालु चित्रलेखाले अनिरुद्धलाई द्वारकापुरीबाट अपहरण गरेर शोणितपुरमा लगेको कुरा सुनेपछि यादवहरू पारिजात अपहरण गर्दाका समयमा पराजित भएका देवताहरूले अनिरुद्धको अपहरण नगरेको कुरामा विश्वस्त भए अर्थात् यादवहरूका मनमा उत्पन्न भएको आशङ्काको निवारण भयो ॥११॥ त्यसपछि परमात्मा श्रीहरिले स्मरण गर्नासाथै त्यहाँ उपस्थित भइसकेका गरुडमा सवार भएर अत्यन्त पराक्रमी बलराम र प्रद्युम्नलाई आफ्ना साथमा लिएर बाणासुरको नगरतिर प्रस्थान गर्नुभयो अर्थात् शोणितपुरतिर जानुभयो ॥१२॥ शोणितपुरमा प्रवेश गर्दाकै समयमा परमात्मा श्रीहरिसँग प्रमथगणको युद्ध भयो तर तिनीहरूको पूर्ण रूपमा विनाश गरिदिनु भएर परमात्मा श्रीकृष्ण बाणासुरको नगरका नजिकमा पुग्नुभयो ॥१३॥ त्यसपछि बाणासुरको सुरक्षाका लागि

ततस्त्रिपादस्त्रिशिरा ज्वरो माहेश्वरो महान्।
बाणरक्षार्थमत्यर्थं ययुधे शार्ङ्गधन्वना ॥१४॥
तद्भस्मस्पर्शसम्भूततापः कृष्णाङ्गसङ्गमात्।
अवाप बलदेवोऽपि श्रममामीलितेक्षणः ॥१५॥
ततः स युध्यमानस्तु सह देवेन शार्ङ्गिणा।
वैष्णवेन ज्वरेणाशु कृष्णदेहान्निराकृतः ॥१६॥
नारायणभुजाघातपरिपीडनविह्वलम्।
तं वीक्ष्य क्षम्यतामस्येत्याह देवः पितामहः ॥१७॥
ततश्च क्षान्तमेवेति प्रोच्य तं वैष्णवं ज्वरम्।
आत्मन्येव लयं निन्ये भगवान् मधुसूदनः ॥१८॥
मम त्वया समं युद्धं ये स्मरिष्यन्ति मानवाः
विज्वरास्ते भविष्यन्तीत्युक्त्वा चैनं ययौ ज्वरः ॥१९॥
ततोऽग्नीन् भगवान् पञ्च जित्वा नीत्वा तथा क्षयम्।
दानवानां बलं कृष्णश्चूर्णयामास लीलया ॥२०॥
ततः समस्तसैन्येन दैतेयानां बलेः सुतः।
युयुधे शङ्करश्चैव कार्त्तिकेयश्च शौरिणा ॥२१॥
हरिशङ्करयोर्युद्धमतीवासीत् सुदारुणम्।
चुक्षुभुः सकलाः लोकाः शस्त्रास्त्रांशुप्रतापिताः ॥२२॥
प्रलयोऽयमशेषस्य जगतो नूनमागतः।
मेनिरे त्रिदशास्तत्र वर्तमाने महाहवे ॥२३॥

महेश्वरद्वारा उत्पन्न गराइएको तीन सिर र तीन खुट्टा भएको ज्वरले शार्ङ्ग धनुष धारण गर्नुभएका परमात्मा श्रीकृष्णसँग युद्ध गर्न थाल्यो । त्यस ज्वरको शरीर अत्यन्त भयानक थियो ॥१४॥ त्यस ज्वरले फ्याँकेको भस्मको स्पर्शका प्रभावले अत्यन्त पीडित हुनु भएका बलरामले परमात्मा श्रीकृष्णका शरीरलाई आलिङ्गन अर्थात् अङ्कमाल गर्दा आँखा बन्द गर्नुभयो अर्थात् चिम्लिनुभयो ॥१५॥ त्यसपछि शार्ङ्ग नाम भएको अत्यन्त उत्तम धनुष धारण गर्नु भएका परमात्मा श्रीकृष्णसँग उहाँकै शरीरमा प्रवेश गरेर युद्ध गरिरहेको माहेश्वर ज्वरलाई वैष्णव ज्वरले अत्यन्त शीघ्रतापूर्वक परमात्मा श्रीकृष्णको शरीरबाट बाहिर निकालिदियो ॥१६॥ त्यस समयमा परमात्मा श्रीवासुदेवका हातहरूको प्रहारबाट अत्यन्त पीडित भएको त्यस माहेश्वरलाई देखेर पितामह ब्रह्माजीले परमात्मा श्रीकृष्णसँग भन्नभयो – हजुरले यसलाई क्षमा गरिदिनुहोस् अर्थात् यसलाई अभयदान दिनुहोस् ॥१७॥ यसपछि परमात्मा श्रीमधुसूदनले "मैले क्षमा गरिदिँए" भनेर त्यो वैष्णव ज्वरलाई आफैंमा विलीन गराइदिनु भयो अर्थात् आफैंभित्र समाहित गराउनुभयो ॥१८॥ त्यसपछि ज्वरले भन्यो– जुन व्यक्तिले हजुरसँग भएको मेरो यस युद्धको स्मरण गर्दछ, त्यसले जीवित रहँदासम्म ज्वरोबाट दुःख पाउने छैन भनेर ऊ त्यहाँबाट गयो ॥१९॥ त्यसपछि परब्रह्म परमात्मा श्रीकृष्णले पञ्चाग्निहरूलाई पराजित गर्दै तिनीहरूको पूर्ण रूपमा संहार गर्न थाल्नुभयो अर्थात् तिनीहरूको विनाश गर्ने कार्य आरम्भ गर्नुभयो ॥२०॥ त्यसपछि सबै दैत्यसेनाबाट पूर्ण रूपमा सम्पन्न भएर बलिका पुत्र बाणासुर र भगवान् शङ्कर एवं कार्त्तिकेयले परमात्मा श्रीकृष्णसँग युद्ध गर्न आरम्भ गरे ॥२१॥ त्यस समयमा परब्रह्म परमात्मा श्रीकृष्ण एवम् सृष्टिका संहारकर्ता महादेवका बीचमा अत्यन्त भयानक युद्ध भयो । यस युद्धमा प्रयोग गरिएका शस्त्र–अस्त्रहरूबाट निस्किएको ज्वाला (प्रकाश) बाट पीडित भएर सबै लोकहरू अत्यन्त भयभीत भए ॥२२॥ यसप्रकारको अत्यन्त भयानक युद्ध भइरहेको देखेर देवताहरूले निश्चय पनि यो सम्पूर्ण जगत्को विनाश हुने समय अर्थात् प्रलय हुने समय आएको रहेछ भन्ने सम्झिए ॥२३॥ यस भयानक युद्धमा

जृम्भणास्त्रेण गोविन्दो जृम्भयामास शङ्करम्।

ततः प्रणेशुर्दैतेयाः पमथाश्च समन्ततः ॥२४॥

जृम्भाभिभूतस्तु हरो रथोपस्थ उपाविशत्।

न शशाक तथा योद्धं कृष्णेनाक्लिष्टकर्मणा ॥२५॥

गरुडक्षतवाहश्च प्रद्युम्नास्त्रप्रपीडितः ।

कृष्णहुङ्कारनिर्द्धूतशक्तिश्चापयौ गुहः ॥२६॥

जृम्भिते शङ्करे नष्टे दैत्यसैन्ये गुहे जिते।

नीते प्रमथसैन्ये च सङ्क्षयं शार्ङ्गधन्वना ॥२७॥

नन्दीशसङ्गृहीताश्वमधिरूढो महारथम्।

बाणस्तत्रायतौ योद्धुं कृष्ण–कार्ष्णिबलैः सह ॥२८॥

बलभद्रो महावीर्यो बाणसैन्यमनेकधा।

विव्याध बाणैः प्रभ्रश्य धर्मतश्चपलायत ॥२९॥

आकृष्य लाङ्गलाग्रेण मुसलेनावपोथितम्।

बलं बलेन ददृशे बाणो बाणैश्च चक्रिणा ॥३०॥

परमात्मा श्रीकृष्णले निद्रा लगाउने अस्त्र प्रहार गरेर शिवशङ्करजीलाई आलस्यभावबाट सम्पन्न गराइदिनु भयो । त्यसपछि महादेवजी अर्धनिद्रित भएपछि प्रमथगण र दैत्यहरूको संहार गर्न थाल्नुभयो अर्थात् तिनीहरूको वध गर्न थाल्नु भयो ॥२४॥भगवान् शिवशङ्कर निद्राको आलस्यका वशमा परेर रथको पछाडिको भागमा बस्नुभयो र अनायास रूपमा नै अत्यन्त अद्‌भुत कार्य गर्नुहुने परमात्मा श्रीकृष्णसँग युद्ध गर्न पूर्ण रूपमा असमर्थ हुनुभयो ॥२५॥ गरुडले कार्तिकेयको वाहन मयूरलाई क्षतविक्षत गरिदिए अर्थात् पूर्ण रूपमा घाइते बनाइदिए तथा स्वयं कार्तिकेय पनि प्रद्युम्नद्वारा प्रहार गरिएको बाणबाट अत्यन्त पीडित भए एवं परमात्मा श्रीकृष्णको हुङ्कार सुनेर भाग्न थाले, यथार्थमा उनी अत्यन्त भयभीत भए ॥२६॥ यसप्रकार परमात्मा श्रीकृष्णबाट शिवजीलाई निद्रायुक्त आलस्यबाट सम्पन्न, कार्तिकेयलाई पूर्ण रूपमा पराजित, दैत्यसेनाहरूको सर्वनाश र प्रमथ गणहरूको शक्ति क्षीण भएको देखेपछि राजा बाणासुर आफ्नो अत्यन्त सुन्दर रथमा सवार भएर परमात्मा श्रीकृष्णको सेनासँग युद्ध गर्न अत्यन्त उत्साहित भएर युद्धभूमिमा आइपुग्यो। बाणासुर जुन रथमा सवार भएको थियो, त्यस रथलाई तान्ने घोडाहरूको लगाम स्वयं नन्दीश्वर (शिवजीको एक गण वा द्वारपाल, जसको मुख बाँदरको भैँ र शरीर कालो हुने भनिएको छ) ले समाएका थिए ॥२७–२८॥ त्यस समयमा अर्थात् बाणासुर आएको देखेपछि अत्यन्त पराक्रमी बलरामले युद्धको नीतिअनुसार अनेकौं किसिमका बाणहरू वर्षाएर बाणासुरको सेनालाई पूर्ण रूपमा छिन्न–भिन्न पारिदिनुभयो । त्यसकारण ती सैनिकहरू आफ्नो युद्धधर्मको परित्याग गरेर यताउता भाग्न थाले ॥२९॥ त्यस समयमा बाणासुरले अत्यन्त पराक्रमी बलरामले आफ्नो हलो र मुसलको प्रयोगद्वारा सेनलाई पीडित पारिरहनुभएको तथा परमात्मा श्रीकृष्णले आफ्नो सुदर्शनचक्रको प्रहार गर्नुभएर तिनीहरूलाई छिन्न–भिन्न पारिरहनुभएको देख्यो ॥३०॥ त्यसपछि परमात्मा

ततः कृष्णस्य बाणेन युद्धमासीत् समस्यतोः ।

परस्परमिषून् दीप्तान् कायत्राणविभेदकान् ॥३१॥

कृष्णश्चिच्छेद बाणैस्तान् बाणेन प्रहिताञ्छरान् ।

विव्याध केशवं बाणो बाणं विव्याध चक्रभृत् ॥३२॥

मुमुचाते तथास्त्राणिबाण–कृष्णौ जिगीषया ।

परस्परं क्षतिपरौ परमामर्षणौ द्विज ॥३३॥

छिद्यमानेष्वशेषेषु शरेष्वस्त्रे च सीदति ।

प्राचुर्येण हरिर्बाणं हन्तुं चक्रे ततो मनः ॥३४॥

ततोऽर्कशतसङ्घाततेजसा सदृशद्युति ।

जग्राह दैत्यचक्रारिर्हरिश्चक्रं सुदर्शनम् ॥३५॥

मुञ्चतो बाणनाशाय तत्र चक्रं मधुद्विषः ।

नग्ना दैतेयविद्याभूत् कोटरी पुरतो हरेः ॥३६॥

तामग्रतो हरिर्दृष्ट्वा मीलिताक्षः सुदर्शनम् ।

मुमोच बाणमुद्दिश्य च्छेत्तुं बाहुवनं रिपोः ॥३७॥

क्रमेण तत्तु बाहूनां बाणस्याच्युतनोदितम् ।

छेदञ्चक्रेऽसुरापास्तशस्त्रौघक्षपणादृतम् ॥३८॥

श्रीकृष्णको बाणासुरसँग अत्यन्त भयानक युद्ध आरम्भ भयो। यो युद्धमा अर्थात् यसरी युद्ध गर्दाका अवस्थामा दुवैले एक–अर्काप्रति अतिशय प्रज्वलित एवं कवच भेदन गर्ने सामर्थ्य भएका बाणहरूको वर्षा गराउन थाले ॥३१॥ परमात्मा श्रीकृष्णले बाणसुरद्वारा सबै किसिमका बाणहरूलाई काटिदिनु भयो। त्यस समयमा अत्यन्तै क्रोधित भएर बाणासुरले परमात्मा श्रीकेशवलाई र श्रीकेशवले बाणासुरलाई बाणहरूले भेदन गरिदिए ॥३२॥ हे ब्राह्मणश्रेष्ठ! यस प्रकार परमात्मा श्रीकृष्ण र बाणासुर दुवैले एकले अर्कामाथि विजय हासिल गर्ने कामनाबाट पूर्ण रूपमा अभिप्रेरित भएर अत्यन्त शीघ्रतापूर्वक निरन्तर रूपमा अत्यन्त तीक्ष्ण अर्थात् तिखा बाणरूको प्रहार गर्न थाले ॥३३॥ यसप्रकार सबै किसिमका बाणहरू टुक्रा–टुक्रा र सबै किसिमका अस्त्र–शस्त्रहरू व्यर्थ भइसकेपछि परमात्मा श्रीहरिले बाणासुरको बध नै गरिदिने निश्चय गर्नुभयो अर्थात् त्यसलाई पूर्ण रूपमा समाप्त गरिदिने निर्णय गर्नुभयो ॥३४॥ त्यसपछि सम्पूर्ण दैत्यहरूका संहारकर्ता परमात्मा श्रीकृष्णले सैकडौं सूर्यहरूका बराबरको तेज भएको आफ्नो सुदर्शन चक्र धारण गर्नुभयो अर्थात् हातमा लिनुभयो ॥३५॥जुन समयमा परमात्मा श्रीमधुसूदनले बाणासुरको बध गर्नका लागि आफ्नो सुदर्शन चक्र चलाउन अर्थात् प्रहार गर्न लाग्नुभएको थियो, त्यसै समयमा दैत्यहरूकी विद्या कोटरी अर्थात् मन्त्रमयी कुलदेवी नग्नावस्थामा परमात्मा श्रीकृष्णका अगाडि आइदिइन् ॥३६॥ त्यसलाई देख्नासाथ परमात्मा श्रीकृष्णले आफ्ना आँखा पूर्ण रूपमा बन्द गर्नुभयो अर्थात् चिम्लिनुभयो र बाणासुरलाई लक्ष गरेर त्यस शत्रुका हातहरू काटिदिनका लागि आफ्नो अतुलनीय शक्ति भएको सुदर्शन चक्र छाडिदिनुभयो अर्थात् प्रहार गर्नुभयो ॥३७॥ परमात्मा श्री अच्युतद्वारा प्रहार गरिएको त्यो सुदर्शन चक्रले दैत्यहरूबाट चलाइएका अस्त्रहरूलाई काट्दै गएर क्रमबद्ध रूपमा बाणासुरका हातहरू काटिदियो । अन्तमा उसका दुइटा हातमात्र बाँकी रहे॥३८॥ त्यसपछि त्रिपुरशत्रु भगवान् शङ्करलाई

छिन्ने बाहुवने तत्तु करस्थं मधुसूदनः ।

मुमुक्षुर्बाणनाशाय विज्ञातस्त्रिपुरद्विषा ॥३९॥

स उपेत्याह गोविन्दं सामपूर्वमुमापतिः ।

विलोक्य बाणं दोर्दण्डच्छेदासृक्स्राववर्षिणम् ॥४०॥

रुद्र उवाच

कृष्ण! कष्ण! जगन्नाथ! जाने त्वां पुरुषोत्तम् ।

परेशं परमानन्दमनादिनिधनं परम् ॥४१॥

देव-तिर्यङ्-मनुष्येषु शरीरग्रहणात्मिका ।

लीलेयं सर्वभूतस्य तव चेष्टोपलक्षणा ॥४२॥

तत् प्रसीदाभयं दत्तं बाणस्यास्य मया प्रभो ।

तत्त्वया नानृतं कार्यं यन्मया व्याहृतं वचः ॥४३॥

अस्मत्संश्रयवृद्धोऽयं नापराध्यस्तवाव्यय ।

मया दत्तवरो दैत्यस्ततस्त्वां क्षमयाम्यहम् ॥४४॥

पराशर उवाच

इत्युक्तः प्राह गोविन्दः शूलपाणिमुमापतिम् ।

प्रसन्नवदनो भूत्वा गतामर्षोऽसुरं प्रति ॥४५॥

श्रीभगवानुवाच,

युष्मद्दत्तवरो बाणो जीवतामेष शङ्कर ।

त्वद्वाक्यगौरवादेतन्मया चक्रं निवर्तितम् ॥४६॥

परमात्मा श्रीमधुसूदनले बाणासुरका हातहरू काटेर आफ्नो हातमा आएको सुदर्शन चक्र उसको वध गर्नका लागि फेरि छोडिदिन चाहनुहुन्छ भन्ने ज्ञान भयो ॥३९॥ त्यसकारण उमापति श्रीमहादेवले बाणासुरका आफ्ना काटिएका हातका गिंडहरूबाट रगतको धारा बगिरहेको देखेर परमात्मा श्रीगोविन्दका नजिकमा आउनुभयो र परमात्मासँग अत्यन्त विनम्रतापूर्वक भन्नुभयो ॥४०॥ **भगवान् श्रीशङ्करले भन्नुभयो**- हे कृष्ण! हे कृष्ण! हे जगन्नाथ! हजुर पुरुषोत्तम परमेश्वर परमानन्द स्वरूप र आदि-अन्त नहुनु भएको मलाई ज्ञान छ अर्थात् यस विषयमा मैले ज्ञान हासिल गरिसकेको छु॥४१॥ हजुरले सबै जीवका हृदयमा निवास गर्नुभएको छ अर्थात् हजुर सर्वभूतमय हुनुहुन्छ । हजुरले देवता, पशुजस्ता तिर्यक्योनि एवं मनुष्यादि योनिहरूमा जुन जन्म ग्रहण गर्नुहुन्छ अर्थात् जन्म लिनुहुन्छ, त्यो हजुरको स्वेच्छाअनुसारको उपलक्षण लीलामात्र हो ॥४२॥ हे प्रभु! हजुर प्रसन्न भइदिनुहोस् । मैले यसभन्दा पहिला नै यस बाणासुरलाई अभयदान दिइसकेको छु। त्यसकारण हे नाथ! मैले जुन वचन दिइसकेको छु, त्यसलाई हजुरले मिथ्या अर्थात् असत्य नबनाइदिनुहोला ॥४३॥ हे अविनाशी परमात्मा! यो स्वयं अपराधी होइन, तर मेरो आश्रय पाएका कारणले गर्दा यो अत्यन्त अभिमानी भएको हो। मैले नै यस दैत्यलाई वरदान दिएको थिएँ। त्यसकारण यसलका लागि म स्वयं क्षमा याचना गर्दछु ॥४४॥ **पराशरजीले भन्नुभयो**-त्रिशूल धारण गर्नुहुने भगवान् श्रीशङ्करले यसरी अनुरोध गर्नुभएपछि परमात्मा श्रीगोविन्दले बाणासुरप्रति उत्पन्न भएको क्रोधभावलाई पूर्ण रूपमा परित्याग गरिदिनुभयो र प्रसन्नतापूर्वक भन्नुभयो ...॥४५॥ **श्रीभगवान्ले भन्नुभयो**- हे शङ्कर! यदि तपाईंले यसलाई वरदान दिनुभएको छ भने यो बाणासुर जीवित रहनेछ। तपाईंका वचनको सम्मान गर्नका लागि म आफ्नो सुदर्शन चक्रलाई रोकिदिन्छु अर्थात् यसलाई फिर्ता लिन्छु॥४६॥ हे शङ्कर!

त्वया यदभयं दत्तं तद्दत्तमखिलं मया।

मत्तोऽविभिन्नमात्मानं द्रष्टुमर्हसि शङ्कर ॥४७॥

योऽहंस त्वं जगच्चेदं सदेवासुरमानुषम्।

अविद्यामोहितात्मानः पुरुषा भिन्नदर्शिनः ॥४८॥

इत्युक्त्वा प्रययौ कृष्णः प्राद्युम्निर्यत्र तिष्ठति।

तद्बन्धफणिनो नेशुर्गरुडानिभिषिताः ॥४९॥

ततोऽनिरुद्धमारोप्य सपत्नीकं गरुत्मति।

आजग्मुर्द्वारकां रामकार्ष्णिदामोदराः पुरीम् ॥५०॥

तपाईंले अभयदान दिनुभएको छ, त्यसलाई मैले पनि अभयदान दिएँ। तपाईंले आफूभन्दा भिन्न अर्थात् अलग भएको नसम्झिनुहोस् ॥४७॥ म जो हुँ, हजुर पनि त्यही हुनुहुन्छ। यी देवता, असुर एवं मनुष्यहरूबाट परिपूर्ण भएको गत् मेरो र तपाईंको स्वरूप हो। तर हे शिवशङ्कर! जसको अन्तरात्मा अविद्याबाट पूर्ण रूपमा मोहित भएको छ, त्यसैले भेद रहेको सम्झन्छ ॥४८॥ यस प्रकारले बताइसकेपछि परमात्मा श्रीकृष्ण जहाँ प्रद्युम्नका पुत्ररत्न अनिरुद्ध रहेका थिए, त्यहाँ जानुभयो। त्यस समयमा अनिरुद्धको बन्धनका रूपमा रहेका नागहरू गरुडलाई देखेपछि अत्यन्त भयभीत हुँदै त्यहाँबाट भाग्न थाले ॥४९॥ त्यसपछि अनिरुद्धलाई उनकी पत्नी उषाका साथ गरुडमा बसाएर बलराम, श्रीकृष्ण र प्रद्युम्न द्वारकापुरीमा आउनुभयो ॥५०॥

इति श्रीविष्णुमहापुराणे पञ्चमांशे त्रयस्त्रिंशोऽध्यायः।

ॐ

## चतुस्त्रिंशोऽध्यायः                    अध्याय – ३४

### "पौण्ड्रकवधः, काशीदहनञ्च"

(पौण्ड्रकको बध तथा काशीदहन)

**मैत्रेय उवाच**

**चक्रे कर्म महच्छौरिर्बिभ्राणो मानुषीं तनुम्।**

**जिगाय शक्रं शर्वञ्च सर्वदेवांश्च लीलया ॥१॥**

**यच्चान्यदकरोत् कर्म दिव्यचेष्टाविघातकृत्।**

**तत् कथ्यतां महाभाग! परं कौतूहलं हि मे ॥२॥**

**पराशर उवाच**

**गदतो मम विप्रर्षे! श्रूतयामिदमादरात्।**

**नरावतारे कृष्णेन दग्धा वाराणसी यथा ॥३॥**

**पौण्ड्रको वासुदेवस्तु वासुदेवोऽभवद् भुवि।**

**अवतीर्णस्त्वमित्युक्तो जनैरज्ञानमोहितैः ॥४॥**

**स मेने वासुदेवोऽहमवतीर्णो महीतले।**

**नष्टस्मृतिस्ततः सर्वं विष्णुचिह्नमचीकररत् ॥५॥**

**दूतञ्च प्रेरयामास कृष्णाय सुमहात्मने।**

**त्यक्त्वा चक्रादिकं चिह्नं मदीयं नाम चात्मनः ॥६॥**

**मैत्रेयले भने–** हे गुरुवर! परमात्मा श्रीविष्णु भगवान्‌ले मनुष्य शरीर धारण गर्नुभएर लीला गर्नुहुँदै इन्द्र, महादेव तथा अन्य देवताहरूलाई पनि पराजित गरिदिनु भएर अर्थात् उनीहरूमाथि विजय हासिल गर्नुभएर जुन अत्यन्त महान् कार्य सम्पन्न गर्नुभयो, त्यसका विषयमा मैले विस्तारपूर्वक सुनिसकें ॥१॥ हे धर्मात्मा! परमात्माले यी कार्यहरू बाहेक अन्य पनि जुन सम्पूर्ण कार्य सम्पन्न गर्नुभएको थियो, ती सबैका विषयमा मलाई सविस्तार सुनाइदिनुहोस्। किनकि, मेरो मनमा परमात्माका ती लीलामय कार्यहरूका विषयमा सुन्ने कौतूहल अर्थात् तीव्र जिज्ञासा उत्पन्न भइरहेको छ ॥२॥ **पराशरजीले भन्नुभयो** – हे ब्राह्मणश्रेष्ठ! मानवस्वरूप धारण गर्नुभएका परब्रह्म परमात्मा श्रीकृष्णले जुन किसिमले वाराणसी नगरको दहन गर्नुभयो अर्थात् डढाइदिदु भयो, म त्यसका विषयमा बताउनेछु, तिमी ध्यानर्पूर्वक सुन ॥३॥ अविवेकबाट यथार्थ रूपमा मोहित भएका केही मनुष्यहरूले पौण्ड्र वंशमा उत्पन्न भएका कुनै एक राजालाई तपाईंले पृथ्वीमा परमात्मा श्रीवासुदेवको स्वरूपमा अवतार लिनुभएको छ भने। यसैले उनी वासुदेवका नामबाट प्रख्यात भए ॥४॥ त्यसपछि आत्मस्मृति अर्थात् पूर्वस्मरण पूर्ण रूपमा नष्ट भएका कारणले ती राजाले आफू स्वयं वासुदेव भएको र आफूले यस पृथ्वीमा अवतार लिएको निश्चय गरे। त्यसपश्चात् ती राजाले परमात्मा श्रीविष्णुका सबै किसिमका चिन्हहरू धारण गर्न थाले ॥५॥ त्यसपछि परब्रह्म परमात्मा श्रीकृष्णका सामीप्यमा उनले एक दूत अर्थात् समाचार –बाहकका माध्यमद्वारा उहाँलाई तिमीले अत्यन्त शीघ्रतापूर्वक मेरा सबै किसिमका चिन्हहरू र मेरो नाम परित्याग गरिदेऊ भन्ने आदेशात्मक किसिमको सन्देश पठाए ॥६॥ जुन

वासुदेवात्मकं मूढ! मुक्त्वा सर्वं विशेषतः।

आत्मनो जीवितार्थाय ततो मे प्रणतिं व्रज ॥७॥

इत्युक्तः सम्प्रहस्यैनं दूतं प्राह जनार्दनः।

निजचिह्नमहं चक्रं समुत्स्रक्ष्ये त्वयीति वै ॥८॥

वाच्यः स पौण्ड्रको गत्वा त्वया दूत! वचो मम।

ज्ञातस्त्वद्वाक्यसद्भावो यत् कार्यं तद्विधीयताम् ॥९॥

गृहीतचिह्न एवाहमागमिष्यामि ते पुरम्।

समुत्स्रक्ष्यामि तच्चक्रं निजचिह्नमशंसयम् ॥१०॥

आज्ञापूर्वञ्च यदिदमागच्छेति त्वयोदितम्।

सम्पादियष्ये श्वस्तुभ्यं तदप्येषोऽविलम्बितम् ॥११॥

शरणं ते समभ्येत्य कर्तास्मि नृपते! तथा।

यथा त्वत्तो भयं भूयो न मे किञ्चिद् भविष्यति ॥१२॥

इत्युक्तेऽपगते दूते संस्मृत्याभ्यागतं हरिः।

गरुमन्तमथारुह्य त्वरितं तत्पुरं ययौ ॥१३॥

स चापि केशवोद्योगं श्रुत्वा काशीपतिस्तदा।

सर्वसैन्यपरीवारः पार्ष्णिग्राह उपाययौ ॥१४॥

सन्देशमा भनिएको थियो– हे अविवेकी! तिमीले आफूलाई वासुदेव भनेर जुन घमण्ड गरिरहेका छौ, त्यसको परित्याग गरिदेऊ तथा आफ्नो जीवनको रक्षा गर्ने अर्थात् जीवित रहने चाहना छ भने मेरो शरणमा शरणागत हुन आऊ ॥७॥ जब दूतले यस किसिमको सन्देश सुनायो, त्यसपछि परमात्मा श्रीकृष्णले मुसुमुसु हाँस्दै त्यस दूतसँग भन्नुभयो– तिमीले गएर आफ्ना स्वामीलाई सुनाइदेऊ कि म आफूले धारण गरेको चिन्हस्वरूप सुदर्शन चक्र अत्यन्तै चाँडै तिम्रा स्वामीमाथि छोडिदिन्छु ॥८॥ हे दूत! तिमीले गएर मेरा तर्फबाट पौण्ड्रकलाई "मैले तिम्रो कुराको वास्तविक भाव यथार्थ रूपमा बुझेँ। त्यसकारण तिमीलाई जे उचित लाग्दछ त्यसै गर" भनेर सुनाइदेऊ ॥९॥ म आफ्नो चिन्ह एवं स्वरूप धारण गरेर तिम्रो नगरमा अवश्य आउनेछु र निश्चित रूपमा आफ्नो चिन्हका रूपमा रहेको सुदर्शन चक्र तिमीमाथि छोडिदिनेछु, यसमा तिमी पूर्ण रूपमा विश्वस्त भएर बस ॥१०॥ तथा तिमीले मलाई जुन आज्ञापूर्वक आदेशात्मक सन्देशमा "यहाँ आऊ" भनेका छौ, म त्यसको पनि अनिवार्य रूपमा पालना गर्दछु। त्यसैले म भोलि नै तिम्रो सेवामा अवश्य उपस्थित हुनेछु, तिमीले यसमा पनि पूर्ण विश्वस्त रहनू ॥११॥ हे नरेश! म तिम्रो सामीप्यमा अर्थात् नजिकमा आएर त्यसै किसिमको व्यवहार गर्नेछु। जसको प्रभावले गर्दा फेरि तिमीबाट मलाई कुनै किसिमको भय उत्पन्न नपाओस् अर्थात् मैले तिमीबाट फेरि कहिल्यै पनि भयभीत हुनु नपरोस् ॥१२॥ परमात्मा श्रीकृष्णले यसरी बताउनु भएपछि त्यो दूत त्यहाँबाट गयो। त्यसपश्चात् परमात्माले स्मरण गर्नासाथै त्यहाँ उपस्थित भएको गरुडमा सवार हुनु भएर अत्यन्त शीघ्रतापूर्वक उसको राजधानीमा जानका लागि द्वारकाबाट प्रस्थान गर्नुभयो अर्थात् काशीतिर लाग्नुभयो ॥१३॥ परमात्मा श्रीकृष्णको आफ्नो राज्यमा आगमन भएको समाचार सुनेपछि काशीराज पनि पृष्टपोषण अर्थात् पछाडि बसेर हौसला बढाउने व्यक्तिहरू सहित आफ्ना सबै सेनाहरूलाई साथैमा लिएर उपस्थित भए अर्थात् आए ॥१४॥

ततो बलेन महता काशिराजबलेन च।

पौण्ड्रको वासुदेवोऽसौ केशवाभिमुखं ययौ ॥१५॥

तं ददर्श हरिर्दूरादुदारस्यन्दने स्थितम्।

चक्रहस्तं गदाशार्ङ्गबाहुं पाणिगताम्बुजम् ॥१६॥

स्रग्धरं पीतवसनं सुपर्णरचितध्वजम्।

वक्षःस्थले कृतञ्चास्य श्रीवत्सं ददृशे हरिः ॥१७॥

किरीटकुण्डलधरं पीतवासःसमन्वितम्।

दृष्ट्वा तं भावगम्भीरं जहास गरुडध्वजः ॥१८॥

युयुधे च बलेनास्य हस्त्यश्वबलिना द्विज।

निस्त्रिंशासिगदाशूलशक्तिकार्मुकशालिना ॥१९॥

क्षणेन शार्ङ्गनिर्मुक्तैः शरैररिषुविदारणैः।

गदाचक्रनिपातैश्च सूदयामास तद्बलम् ॥२०॥

काशिराजबलंचैवं क्षयं नीत्वा जनार्दनः।

उवाच पौण्ड्रकं मूढमात्मचिह्नोपलक्षणम् ॥२१॥

श्रीभगवानुवाच

पौण्ड्रकोक्तं त्वया यत्तु दूतवक्त्रेण मां प्रति।

समुत्सृजेति चिह्नानि तत्ते सम्पादयाम्यहम् २२॥

चक्रमेतत् समुत्सृष्टं गदेयं ते विसिर्जिता।

गरुत्मानेष निर्दिष्टः समारोहतु ते ध्वजम् ॥२३॥

त्यसपश्चात् आफू साक्षात् वासुदेव भएको घमण्डबाट अभिप्रेरित भएका काशी नगरका अधिपति राजा पौण्ड्रक आफ्नो अत्यन्त विशाल सेनालाई साथमा लिएर परमात्मा श्रीकृष्णका अगाडि उपस्थित भए अर्थात् आए ॥१५॥ परमात्मा श्रीहरिले टाढैबाट आफ्ना हातमा चक्र, गदा, शार्ङ्गधनुष र कमलको फूल लिएर एउटा अत्यन्त उत्तम रथमा विराजमान भएका पौण्ड्रकलाई देख्नुभयो ॥१६॥ परमात्मा श्रीहरिले उसको गलामा अर्थात् घाँटीमा वैजयन्तीमाला, शरीरमा पीताम्बर रहेको, गरुडयुक्त ध्वजा र छातीमा श्रीवत्सको चिन्ह रहेको देख्नुभयो ॥१७॥ उसले विभिन्न किसिमका रत्नहरूबाट सुसज्जित शिरपेच अर्थात् मुकुट एवं कुण्डल धारण गरिरहेको देखेर गरुड वाहन भएका परमात्मा अत्यन्त गम्भीरतापूर्वक हाँस्न थाल्नुभयो ॥१८॥ त्यसपछि हे ब्राह्मणश्रेष्ठ! उसको हात्ती र घोडाहरूबाट अत्यन्त बलशाली र तरवार, खड्ग, गदा, शूल अर्थात् भिर जस्तै प्राचीन एक हतियार र धनुषबाट पूर्ण रूपमा सुसज्जित भएको सेनासँग युद्ध गर्न थाल्नुभयो ॥१९॥ परमात्मा श्रीकृष्णले एक क्षणमै आफ्नो शार्ङ्गधनुषबाट छोड्नु भएका शत्रुहरूलाई अत्यन्त पीडित बनाउने आफ्ना अत्यन्त तेजिला बाणहरू एवं गदा र चक्रबाट उसका सम्पूर्ण सेनाहरूको विनाश गरिदिनु भयो अर्थात् तिनीहरूलाई अत्यन्त भयभीत गराइदिनुभयो ॥२०॥ यसप्रकार काशीरको र पौण्ड्रकको सेनालाई नष्ट गरिसक्नु भएपछि परमात्मा श्रीजनार्दनले आफ्ना चिन्हहरू धारण गरेको अत्यन्त अविवेकी अर्थात् महामूर्ख पौण्ड्रकसँग भन्नुभयो ... ॥२१॥ **श्री भगवान्ले भन्नुभयो**– हे पौण्ड्रक! तिमीले आफ्नो दूतद्वारा मलाई "तिमीले मेरा चिन्हहरू परित्याग गरिदेऊ" भन्ने समाचार पठाएका थियौ। त्यसकारण अब म तिम्रा अगाडि तिम्रो त्यो आज्ञाको पालना गर्दछु अर्थात् मैले धारण गरिरहेका चिन्हहरू परित्याग गर्दछु ॥२२॥ तिम्रो आदेशात्मक आज्ञाका अनुसार मैले यो चक्र छोडिदिएँ, यो गदा पनि छोडिदिएँ र यो मेरो वाहन गरुड पनि छोडिदिएँ। अब यो गरुड तिम्रो ध्वजा अर्थात् भण्डामा अवस्थित हुनेछ ॥२३॥ **पराशरजीले भन्नुभयो–**

पराशर उवाच

इत्युच्चार्य विमुक्तेन चक्रेणासौ विदारितः ।

पोथितो गदया भग्नो गरुत्मांश्च गरुत्मता ॥२४॥

ततो हाहाकृते लोके काशिपुर्य्यधिपो बली ।

युयुधे वासुदेवेन मित्रस्यापचितौ स्थितः ॥२५॥

ततः शार्ङ्गधनुर्मुक्तैश्छित्त्वा तस्य शरैः शिरः ।

काशिपुर्य्याञ्च चिक्षेप कुर्वन् लोकस्य विस्मयम् ॥२६॥

हत्वा च पौण्ड्रकं शौरिः काशिराजञ्च सानुगम् ।

पुनर्द्वारवतीं प्राप्तो रेमे स्वर्गगतो यथा ॥२७॥

तच्छिरः पतितं दृष्ट्वा तत्र काशिपतेः पुरे ।

जनः किमेतदित्याहच्छिन्नं केनेति विस्मितः ॥२८॥

ज्ञात्वा तं वासुदेवेन हतं तस्य सुतस्ततः ।

पुरोहितेन सहितस्तोषयामास शङ्करम् ॥२९॥

अविमुक्ते महाक्षेत्रे तोषितस्तेन शङ्करः ।

वरं वृणीष्वेति तदा तं प्रोवाच नृपात्मजम् ॥३०॥

स वव्रे भगवान् कृत्या पितृहन्तुर्वधाय मे ।

समुत्तिष्ठतु कृष्णस्य त्वत्प्रसादान्महेश्वर ॥३१॥

पराशर उवाच

एवं भविष्यतीत्युक्ते दक्षिणाग्नेरनन्तरम् ।

महाकृत्या समुत्तस्थौ तस्यैवाग्नेर्विनाशिनी ॥३२॥

परमात्मा श्रीकृष्णले यसो भनेर छाडिदिनुभएको त्यो सुदर्शन चक्रले पौण्ड्रकलाई अत्यन्त विदीर्ण गरिदियो अर्थात् चिरर दुई फ्याक पारिदियो, उसलाई गदाले रथबाट जमिनमा झारिदियो र गरुडले उसको ध्वजा अर्थात् झण्डा च्यातिदियो ॥२४॥ त्यसपछि यहाँ उपस्थित भएका सबै सेनाहरूका बीचमा हाहाकार अर्थात् कोलाहल मच्चिन थालेपछि आफ्ना मित्रको हत्याको बदला लिनका लागि काशीका राजाले परमात्मा श्रीवासुदेवसँग युद्ध गर्न थाले अर्थात् परमात्मा श्रीकृष्ण र काशीराजका बीचमा युद्ध आरम्भ भयो ॥२५॥ त्यस समयमा परमात्मा श्रीकृष्णले आफ्नो शार्ङ्ग नाम भएको धनुषबाट छोडिदिनुभएको एउटा बाणका माध्यमद्वारा काशीराजको शिर काटेर काशीपुरीमा फ्याँकिदिनु भयो। यसरी उनको सिर काटिएको देख्ने मनुष्यहरू अत्यन्त आश्चर्यचकित भए ॥२६॥ यस प्रकार पौण्ड्रक र काशीनरेशलाई आफ्ना सेवकहरू सहित वध गरिदिनु भएर अर्थात् मारिदिएर परमात्मा श्रीकृष्ण फर्किएर द्वारकामा आउनुभयो र त्यहाँ स्वर्गका बराबरको सुखको उपभोग गर्दै अत्यन्त आनन्दपूर्वक घुमफिर गर्न थाल्नुभयो ॥२७॥ त्यसपश्चात् काशीपुरीमा काशीका राजाको कटिएको सिर झरेको देखेर नगरका सबै बासिन्दाहरू एक अर्काका बीचमा कुराकानी गर्दै भन्न थाले, यो के भयो, राजालाई कसले काटिदियो? ॥२८॥ त्यसपछि जब काशीराजका पुत्रलाई परमात्मा श्रीकृष्णले आफ्ना पिताको शिर काटिदिनुभएको कुरा थाहा भयो। त्यसपश्चात् उनले आफ्ना पुरोहितसँग समायोजित भएर भगवान् श्रीशङ्करलाई प्रसन्न गराए ॥२९॥ अविमुक्त अर्थात् काशी महाक्षेत्रमा ती काशीराजका छोराबाट अत्यन्त प्रसन्न हुनु भएका भगवान् श्रीशङ्करले वरदान माग भन्नुभयो अर्थात् वर माग्ने आज्ञा दिनुभयो ॥३०॥ ती काशीराजका पुत्रले भने– हे महेश्वर! हे भगवान्! यदि हजुरको कृपा रहेको छ भने मेरा पिताका वध गर्ने परमात्मा श्रीकृष्णको विनाश गराउनका लागि अग्निबाट कृत्या उत्पन्न होउन् ॥३१॥ **पराशरजीले भन्नुभयो**– त्यसपछि भगवान् श्रीमहेश्वरले भन्नुभयो– "त्यस्तै हुने छ"। उहाँले यसो भनिसकेपछि दक्षिणाग्निको चयन गरेपछि त्यसैको अग्निलाई विनाश गर्ने शक्तिशाली एक कृत्या उत्पन्न भइन् ॥३२॥ त्यस

ततो ज्वालाकरालास्या ज्वलत्केशकपालिका ।
कृष्ण कृष्णेति कुपिता कृत्या द्वारवतीं ययौ ॥३३॥
तामवेक्ष्य जनस्त्रासविचल्लोचनो मुने ।
ययौ शरण्यं जगतां शरणं मधुसूदनम् ॥३४॥
काशिराजसुतेनेयमाराध्य वृषभध्वजम् ।
उत्पादिता महाकृत्येत्यवगम्याथ चक्रिणा ॥३५॥
जहि कृत्यामिमामुग्रां वह्निज्वालाजटालकाम् ।
चक्रमुत्सृष्टमक्षेषु क्रीडासक्तेन लीलया ॥३६॥
तदग्निमालाजटिलज्वालोद्गारातिभीषणाम् ।
कृत्यामनुजगामाशु विष्णुचक्रं सुदर्शनम् ॥३७॥
चक्रप्रतापविध्वस्ता कृत्या माहेश्वरी तदा ।
ननाश वेगिणी वेगात् तदप्यनुजाम ताम् ॥३८॥
कृत्या वाराणसीमेव प्रविवेश त्वरान्विता ।
विष्णुचक्रप्रतिहतप्रभावा मुनिसत्तम ॥३९॥
ततः काशिबलं भूरि प्रमथानां तथा बलम् ।
समस्तशस्त्रास्त्रयुतं चक्रस्याभिमुखं ययौ ॥४०॥

कृत्याको अत्यन्त विकराल अर्थात् भयानक मुख अग्निको ज्वालाहरूबाट परिपूर्ण भएको थियो र त्यसको कपालराशि आगोको लपेटाका समान अत्यन्त दीप्तिमान एवम् तामाको वर्ण भएको थियो। ती अत्यन्त क्रोधित भएर "कृष्ण! कृष्ण!! भन्दै अत्यन्त तीव्रगतिमा द्वारकापुरीमा आइपुगिन् ॥३३॥ हे मुनिश्रेष्ठ! ती अत्यन्त भयानक स्वरूप भएकी कृत्यलाई देखेर भयभीत भएका कारणले चञ्चल आँखा भएका द्वारकाका बासिन्दाहरू परमात्मा श्रीमधुसूदनको शरणमा आश्रय लिन आए ॥३४॥ जब परमात्मा श्रीकृष्णले काशीराजका पुत्रले भगवान् श्रीशङ्करको आराधना अर्थात् उपासना गरेर यी कृत्यालाई उत्पन्न गराएको कुरा थाहा पाउनु भयो, त्यस समयमा अक्षक्रीडामा व्यस्त रहनु भएका उहाँले यो अत्यन्त प्रज्वलित आगोको लपेटारूपी कपालहरू भएकी अत्यन्त भयानक कृत्यालाई मारिदेऊ भनेर आफ्नो अतुलनीय शक्तिशाली सुदर्शन चक्र छोडिदिनुभयो ॥३५-३६॥ त्यसपश्चात् परमात्मा श्रीकृष्णले छाडिदिनुभएको त्यो सुदर्शन चक्रले ती आगोको लपेटाबाट सम्पन्न र अत्यन्त भयानक मुखाकृति भएकी कृत्यालाई अत्यन्त तीव्र गतिमा पछ्याउन थाल्यो ॥३७॥ त्यसपछि अत्यन्त तीव्र गति भएकी एवम् भगवान् श्रमहेश्वरबाट उत्पन्न भएकी ती कृत्या परमात्मा श्रीविष्णुको सुदर्शन चक्रको तेजको प्रभाव थाम्न नसकेर विध्वस्त भएर अत्यन्त शीघ्रतापूर्वक भाग्न थालिन् तथा सुदर्शन चक्रले त्यसै अनुसारको गतिमा त्यसको पीछा गर्न थाल्यो ॥३८॥ यसप्रकार भाग्दै गरेकी कृत्याले अत्यन्त तीव्रगतिमा वाराणसीपुरीमा प्रवेश गरिन् । हे मुनिश्रेष्ठ! त्यस समयमा परमात्मा श्रीविष्णुको सुदर्शन चक्रको प्रभावले गर्दा कृत्याको प्रभाव पूर्ण रूपमा नष्ट भइसकेको थियो अर्थात् ऊ प्रभावविहीन भइसकेकी थिइन् ॥३९॥ त्यसपछि काशीनरेशका सम्पूर्ण सेना र भगवान् शिवका प्रमथगण अस्त्रहरूबाट पूर्ण रूपमा सुसज्जित भएर त्यो परमात्मा श्रीविष्णुको सुदर्शन चक्रका अगाडि आए ॥४०॥ त्यसपछि त्यो

शस्त्रास्त्रमोक्षचतुरं दग्ध्वा तद्बलमोजसा।

कृत्यागर्भामशेषां तां तथा वाराणसीं पुरीम् ॥४१॥

सभूभृद्भृत्यपौ रां तु साश्वमातङ्गमानवाम्।

अशेषकोषगोष्ठां तां दुर्निरीक्ष्यां सुरैरपि ॥४२॥

ज्वालापरिप्लुताशेष–गृह–प्राकारचत्वराम्।

ददाह तद्धरेश्चक्रं सकलामेव तां पुरीम् ॥४३॥

अक्षीणामर्षमत्युग्रसाध्यसाधनसस्पृहम्।

तच्चक्रं प्रस्फुरद्दीप्ति विष्णोरभ्याययौ करम् ॥४४॥

सुदर्शनचक्रले आफ्नो अतुलनीय तेजबाट शस्त्रअस्त्रहरूको प्रयोग गर्नका लागि अत्यन्त सिपालु त्यो सैनिकहरूको समूहलाई पूर्ण रूपमा जलाइदिएर कृत्याका साथ–साथै सम्पूर्ण वाराणसी नगरीलाई पनि जलाउन थाल्यो ॥४१॥ वाराणसी नगरीमा त्यसका राजा, प्रजा, नगरबासीहरू, सेवक अथवा पालन–पोषण गर्न योग्य, घोडा, हात्ती, मनुष्य अनेकौं कोष अर्थात् खरखजाना र गाईको गोठ जे जति थिए, ती सबै जलेर पूण रूपमा नष्ट भए ॥४२॥ परमात्मा श्रीहरिको त्यो सुदर्शन चक्रले पूर्ण रूपमा आगोको लपेटाबाट सम्पन्न भएर सम्पूर्ण घर, चारैतिर घेरिएको बार वा पर्खाल आदिहरूबाट अग्निका ज्वालाहरू प्रकट गराएर एवं देवताहरूका लागि पनि दुर्दर्शनीय अर्थात् दर्शन पाउन अत्यन्त कठिन मानिएको त्यो वाराणसीलाई पूर्ण रूपमा जलाइदियो ॥४३॥ अन्तमा, अत्यन्त क्रोधित भएको र अत्यन्त भयानक कर्म गर्नका लागि पूर्ण रूपमा उत्साहित भएको तथा जसको किरण चारैतिर फैलिरहेका थिए, त्यो सुदर्शन चक्र फर्किएर फेरि परमात्मा श्रीविष्णुका अर्थात् श्रीकृष्णका हातमा आयो ॥४४॥

इति श्रीविष्णुमहापुराणे पञ्चमांशे चतुस्त्रिंशोऽध्यायः।

ॐ

पञ्चत्रिंशोऽध्यायः	अध्याय – ३५

## "कृष्णपुत्र–साम्बस्य विवाहः"

(परमात्मा श्रीकृष्णका पुत्ररत्न साम्बको विवाह)

मैत्रेय उवाच

भूय एवाहमिच्छामि बलभद्रस्य धीमतः ।

श्रोतुं पराक्रमं ब्रह्मन्! तन्ममाख्यातुमर्हसि ॥१॥

यमुनाकर्षणादीनि श्रुतानि भगवन्मया ।

तत् कथ्यतां महाभाग! यदन्यत् कृतवान् बलः ॥२॥

पराशर उवाच

मैत्रेय! श्रूयतां कर्म यद् रामेणाभवत् कृतम् ।

अनन्तेनाप्रमेयेण शेषेण धरणीभृता ॥३॥

दुर्योधनस्य तनयां स्वयंवरकृतक्षणाम् ।

बलादादत्तवान् वीरः साम्बो जाम्बवतीसुतः ॥४॥

ततः क्रुद्धा महावीर्याः सर्वे क्रोधं दुर्योधनादिषुः ।

भीष्मद्रोणादयश्चैव बबन्धुर्युधि निर्जितम् ॥५॥

तच्छ्रुत्वा यादवाः सर्वे क्रोधं दुर्योधनादिषु ।

मैत्रेय! चक्रुश्च ततो निहन्तुं ते महोद्यमम् ॥६॥

तान् निवार्य बलः प्राह मदलोलाकुलाक्षरम् ।

मोक्ष्यन्ति ते मद्वचनाद् यास्याम्येको हि कौरवान् ॥७॥

**मैत्रेयले भने–** हे ब्राह्मणश्रेष्ठ! अब म फेरि अत्यन्त बलशाली एवं बुद्धिमान् बलरामको पराक्रमका विषयमा सविस्तार सुन्न चाहन्छु, त्यसैले हजुरले ममा कृपा गरेर विस्तारपूर्वक बताइदिनुहोस् ॥१॥ हे भगवान्! मैले उहाँले यमुना नदीलाई आफ्नो अत्यन्त उत्तम हलोद्वारा तान्नुभएको आदि पराक्रमका विषयमा त सुनिसकें। हे धर्मात्मा! अब उहाँले अन्य जे–जे कार्यमा आफ्नो पराक्रम देखाउनुभएको छ, ती सबैका विषयमा विस्तारपूर्वक बताइदिनुहोस् ॥२॥ **पराशरजीले भन्नुभयो–** हे मैत्रेय! अनन्त, अप्रमेय, पृथ्वीलाई धारण गर्नुहुने शेषनागको अंशबाट अवतार लिनुभएका अत्यन्त शक्तिशाली श्रीबलरामले जुन जुन कर्महरूमा आफ्नो अतुलनीय पराक्रम देखाउनु भएको थियो, तिनीहरूका विषयमा मबाट विस्तारपूर्वक सुन ॥३॥ एक समयमा परमात्मा श्रीकृष्ण र जाम्बवतीका पुत्ररत्नका रूपमा उत्पन्न भएका अतुलनीय शक्तिबाट सम्पन्न भएका साम्बले स्वयम्वरका अवसरमा दुर्योधनकी पुत्रीलाई जबरजस्ती अपहरण गरेका थिए अर्थात् स्वयम्वर गर्ने ठाउँबाट उठाएर लगेका थिए ॥४॥ त्यस समयमा अत्यन्त क्रोधित भएका महारथीहरू कर्ण, दुर्योधन, भीष्म, द्रोणजस्ता अत्यन्त पराक्रमी वीरहरूले जाम्वतीका पुत्ररत्न साम्बलाई युद्धमा पराजित गरेर बाँधिदिए ॥५॥ त्यसपछि हे मैत्रेय! यस्तो किसिमको समाचार पाएपछि परमात्मा श्रीकृष्ण लगायत सबै यादवहरूले दुर्योधन आदि कौरवहरूप्रति अत्यन्त क्रोधित भएर उनीहरूको वध गर्न अर्थात् उनीहरूलाई मार्नका लागि एउटा अत्यन्त भयानक योजना बनाए ॥६॥ तर यादवहरूको योजनालाई थाती राखेर अर्थात् उनीहरू सबैलाई रोकेर अत्यन्त पराक्रमी बलरामजीले मदिराको उन्मादका प्रभावले लरबराएको स्वरमा भन्नुभयो– "मेरो वचनका प्रभावले गर्दा कौरवहरूले साम्बलाई छाडिदिनेछन्, त्यसकारण उनीहरूका नजिकमा म एक्लै जान्छु" ॥७॥ **पराशरजीले भन्नुभयो –**

पराशर उवाच

बलदेवस्ततो गत्वा नगरं नागसाह्वयम्।

बाह्योपवनमध्येऽभून्न विवेश च तत्पुरम् ॥८॥

बलमागतमाज्ञाय भूपा दुर्योधनादयः।

गामर्घ्यमुदकञ्चैव रामाय प्रत्यवेदयन् ॥९॥

गृहीत्वा विधिवत् सर्वं ततस्तानाह कौरवान्।

आज्ञापयत्युग्रसेनः साम्बामासु विमुञ्चत ॥१०॥

ततस्ते तद्वचः श्रुत्वा भीष्मद्रोणादयो द्विज!

कर्णदुर्योधनाद्याश्च चुक्रुधर्द्विजसत्तम ॥११॥

ऊचुश्च कुपिताः सर्वे बाह्लिकाद्याश्च कौरवाः।

अराज्यार्हं यदोर्वंशमवेक्ष्य मुसलायुधम् ॥१२॥

भो भो! किमेतद् भवता बलभद्रेरितं वचः।

आज्ञां कुरुकुलोत्थानां यादवः कः प्रदास्यति ॥१३॥

उग्रसेनोऽपि यद्याज्ञां कौरवाणां प्रदास्यति।

तदलं पाण्डुरच्छत्रैर्नृपयोग्यैर्विडम्बितैः ॥१४॥

तद्गच्छ बल! पापाढ्यं साम्बमन्यायचेष्टितम्।

विमोक्ष्यामो न भवतो नोग्रसेनस्य शासनात् ॥१५॥

प्रणतिर्या कृतास्माकं मान्यानां कुकुरान्धकैः।

नमाम सा कृता केयमाज्ञा स्वामिनि भृत्यतः ॥१६॥

त्यसपछि अत्यन्त पराक्रमी बलराम हस्तिनापुरको नजिकमा पुगिसकेपछि त्यसको बाहिरतिरै रहेको एउटा अत्यन्त सुन्दर बगैंचामा बसेर विश्राम गर्न थाल्नुभयो, उहाँले हस्तिनापुरमा प्रवेश गर्नुभएन ॥८॥ त्यसपछि दुर्योधन आदि राजाहरूले अत्यन्त पराक्रमी बलराम हस्तिनापुरको नजिकमा आउनु भएको समाचार पाएपछि उहाँलाई गाई, अर्घ्य र पाद्य आदि स्वीकार गर्न निवेदन गरे अर्थात् उहाँमा समर्पण गरे ॥९॥ कौरवहरूद्वारा समर्पण गरिएका वस्तुहरू स्वीकार गर्दै अत्यन्त पराक्रमी बलरामले उनीहरूसँग भन्नुभयो– राजा उग्रसेनले दिनुभएको आज्ञा अनुसार तपाईंहरूले साम्बलाई तुरुन्त अर्थात् यसै समयमा छोडिदिनु पर्‍यो ॥१०॥ हे ब्राह्मणहरूमा सर्वोत्कृष्ट! अत्यन्त शक्तिशाली बलरामजीका यस प्रकारका वचनहरू सुनेर भीष्म, द्रोण, कर्ण र दुर्योधन आदि राजाहरू अत्यन्त क्रोधित भए अर्थात् रिसको प्रभावले गर्दा अतिशय व्याकुल भए ॥११॥ त्यसपछि यदुवंशलाई राज्यपदका लागि अर्थात् राजा भएर राज्य गर्नका लागि अयोग्य सम्झिएर वाह्लिक आदि सबै कौरवहरू अत्याधिक मात्रामा क्रोधित भएर अत्यन्त पराक्रमी बलरामजीसँग भन्न थाले ॥१२॥ हे बलराम! तिमी यो के भनिरहेका छौ, यदुवंशमा त्यस्तो कुन व्यक्ति उत्पन्न भएको छ, जसले अत्यन्त प्रसिद्ध कुरुका कुलमा उत्पन्न भएका अत्यन्त शक्तिशाली महारथीहरूमध्ये कसैलाई आज्ञा दिने हिम्मत गर्दछ अर्थात् यस प्रकारको आदेशात्मक आज्ञा दिन सक्दछ? ॥१३॥ यदि उग्रसेनले पनि कौरवहरूलाई आज्ञा दिनसक्ने सामर्थ्य अर्थात् क्षमता राख्दछन् भने राजाहरूका लागि अत्यन्त योग्य यो सेतो छाताको के मर्यादा रह्यो अर्थात् या छाता महत्त्वहीन भयो ॥१४॥ त्यसकारण हे बलराम! तिमी जाऊ अथवा बस, त्यसको हामीलाई कुनै मतलव छैन। हामीहरू तिम्रो अथवा उग्रसेनको आज्ञा अनुसार यी पूर्ण रूपमा अन्याययुक्त कर्म गर्ने साम्बलाई छाड्न सक्दैनौं ॥१५॥ कुकुर र अन्धकवंशीय यादवहरू प्राचीन कालमा हामी सम्माननीय कौरवहरूलाई प्रणाम गर्दथे तर अहिलेको अवस्थामा त्यसो गर्दैनन्, त्यसबाट कुनै हानि भएको छैन। तरपनि एउटा सेवकले आफ्नो स्वामीलाई कसरी आज्ञा दिन सक्दछ ? ॥१६॥ हामीहरूले तिमीहरूसँग

गर्वमारोपिता यूयं समानासनभोजनैः ।

को दोषो भवतां नीतिर्यत् प्रीत्या नावलोकिता ॥१७॥

अस्माभिरर्घो भवतो योऽयं बल निवेदितः ।

प्रेम्णैतन्नैतदस्माकं कुलाद् युष्मत्कुलोचितम् ॥१८॥

पराशर उवाच

इत्युक्त्वा कुरवः सर्वे न मुञ्चामो हरेः सुतम् ।

कृतैकनिश्चयास्तूर्णं विविशुर्गजसाह्वयम् ॥१९॥

मत्तः कोपेन चाघूर्णंस्तदधिक्षेपजन्मना ।

उत्थाय पार्ष्ण्या वसुधां जघान स हलायुधः ॥२०॥

ततो विदारिता पृथ्वी पार्ष्णिघातान्महात्मनः ।

आस्फोटयामास तथा दिशः शब्देन पूरयन् ॥२१॥

स उवाचातिताम्राक्षो भ्रुकुटीकुटिलाननः ।

अहो मदावलेपोऽयमसाराणां दुरात्मनाम् ॥२२॥

कौरवाणां महीपत्वमस्माकं किल कालजम् ।

उग्रसेनस्य ये नाज्ञां मन्यन्तेऽद्यापि लङ्घनम् ॥२३॥

आज्ञां प्रतीच्छेद्धर्मेण सह देवैः शचीपतिः ।

सदाध्यास्ते सुधर्मा तामुग्रसेनः शचीपतेः ॥२४॥

एउटै आसनमा सँगसँगै बस्ने, समाहित रूपमा भोजन गर्ने आदि व्यवहार गरिदिएर तिमीहरूलाई अत्यन्त घमण्डी बनाइदियौँ, यसमा तिमीहरूको कुनै दोष रहेको छैन । किनकि हामीहरूले नै प्रेममा अत्यन्त आसक्त भएका कारणले गर्दा नीति र मर्यादाका विषयमा विचार गरेनौं ॥१७॥ हे बलराम! हामीले तिमीलाई जुन यो अर्घ्य आदि समर्पण गर्‍यौं त्यो हामीहरूमा प्रेमभाव भएका कारणले मात्र गरिएको हो । यथार्थमा हाम्रो कुलका तर्फबाट तिमीहरूको कुलमा उत्पन्न भएका कुनैपनि व्यक्तिलाई अर्घ्य आदि समर्पण गर्नु उचित छैन ॥१८॥ **पराशरजीले भन्नुभयो**– कुरुहरू यस किसिमको जवाफ दिएर तथा हामीहरू परमात्मा श्रीकृष्णका पुत्ररत्न साम्बलाई मुक्त गर्दैनौं यस प्रकारको निश्चय गरेर हस्तिनापुरमा फर्किए ॥१९॥ त्यसपछि हलो धारण गर्नुहुने अत्यन्त पराक्रमी बलरामजीले ती कौरवहरूबाट गरिएको अपमान सहन गर्न नसकेर अत्यन्त क्रोधित हुँदै आँखा तर्दै पृथ्वीमा एक लात्ती हिर्काउनुभयो ॥२०॥ महात्मा बलरामले लात्तीले हिर्काए पछि पृथ्वीमा धाँजा फाट्यो अर्थात् पृथ्वी चिरिइन् र उहाँले आफ्नो वीरतापूर्ण गर्जना अर्थात् गर्जाइबाट दसै दिशाहरूलाई कम्पायन गराउन थाल्नुभयो ॥२१॥ तथा अत्यन्त क्रोधित हुनुभएका कारणले आफ्ना आँखाहरू राता–राता र आँखिभौंलाई टेढो पार्दै अत्यन्त पराक्रमी बलरामले भन्नुभयो– ओहो! अति तुच्छ सामर्थ्य भएका दुष्टात्मा कौरवहरूमा यो कस्तो राजमद अर्थात् राजा भएको अभिमान उत्पन्न भएको हो? ॥२२॥ कौरवहरूलाई पृथ्वीको अधिपति अर्थात् राजा हुने स्वतःसिद्ध अधिकार रहेको छ। त्यसकारण यिनीहरूले आज महाराज उग्रसेनको आज्ञा पालन गर्दैनन्, बरु त्यसको उल्लङ्घन गरिरहेका छन् ॥२३॥ आज राजा उग्रसेन सुधर्मा साभामा स्वयं विराजमान हुन्छन् अर्थात् बस्दछन् । त्यसमा शचीपति इन्द्र पनि बस्न सक्दैनन्, तर यी घमण्डी कौरवहरूलाई धिक्कार छ, जसलाई सैकडौं मनुष्यहरूले भोग गरिसकेर जुठोको रूपमा प्राप्त भएको राजसिंहासनमा अत्यन्त सन्तुष्टि प्राप्त गरिरहेका छन् ॥२४॥ ती उग्रसेन यिनीहरूका महाराज

धिङ्मनुष्यशतोच्छिष्टे तुष्टिरेषां नृपासने।
पारिजाततरोः पुष्पमञ्जरीर्वनिताजनः ॥२५॥
विभर्ति यस्य भृत्यानां सोऽप्येषां न महीपतिः।
समस्तभूभृतां नाथ उग्रसेनः स तिष्ठतु ॥२६॥
अद्य निष्कौरवामुर्वीं कृत्वा यास्मामि तत्पुरीम्।
कर्णं दुर्योधनं द्रोणमद्य भीष्मं सवाह्लिकम् ॥२७॥
दुष्यन् दुःशासनादींश्च भूरिश्रवसमेव च।
सोमदत्तं शलं भीममर्जुनं सयुधिष्ठिरम् ॥२८॥
यमजौ कौरवांश्चान्यान् हत्वा साश्वरथद्विपान्।
वीरमादाय साम्बञ्च सपत्नीकं ततः पुरीम्।
द्वारकामुग्रसेनादीन् गत्वा द्रक्ष्यामि बान्धवान् ॥२९॥
अथवा कौरवाधीनं समस्तैः कुरुभिः सह।
भागीरथ्यां क्षिपाम्याशु नगरं नागसाह्वयम् ॥३०॥
पराशर उवाच
इत्युक्त्वा मदरक्ताक्षः कर्षणाधोमुखं हलम्।
प्राकारवप्रे विन्यस्य चकर्ष मुसलायुधः ॥३१॥
आघूर्णितं तत् सहसा ततौ वै हस्तिनापुरम्।
दृष्ट्वा संक्षुब्धहृदयाश्चुक्रुशुः सर्वकौरवाः ॥३२॥
राम! राम! महाबाहो! क्षम्यतां क्षम्यतां त्वया।
उपसंह्रियतां कोपः प्रसीद मुसलायुध ॥३३॥
एष साम्बः सपत्नीकस्तव निर्यातितो बल।
अविज्ञातप्रभावाणां क्षम्यतामपराधिनाम् ॥३४॥

होइनन्, जसका सेवकका स्त्रीहरूले पनि अत्यन्त पवित्र र सर्वोत्कृष्ट पारिजातका फूलको मञ्जरी अर्थात् कोपिला धारण गर्दछन्। तिनै उग्रसेन नै पृथ्वीमा भएका सबै राजाहरूका महाराज बनेर रहुन्। आज म एक्लैले नै यी पृथ्वीलाई यथार्थ रूपमा कौरवविहीन बनाएर मात्र फर्किएर द्वारकापुरीमा जानेछु ॥२५–२६॥ आज म यी अत्यन्त दुष्टात्मा कर्ण, दुर्योधन, द्रोण, भीष्म, वाह्लीक, दुष्ट एवम् अत्यचारी दुःशासन आदि, भूरिश्रवा, सोमदत्त, शल, भीम, अर्जुन, युधिष्ठिर, नकुल, सहदेव र अन्य सबै कौरवहरूलाई तथा उनीहरूका हात्ती, घोडा एवं रथसहित पूर्ण रूपमा विनाश गरिदिएर अर्थात् मारिदिएर र अत्यन्त शक्तिशाली साम्बलाई उनकी पत्नीसहित आफैसँग लिएर मात्र आफ्नो सर्वोत्तम निवासस्थान द्वारकापुरीमा फर्किनेछु। त्यसपश्चात् मात्र मैले महाराज उग्रसेनसहित आफ्ना बन्धु–बान्धवहरूको दर्शन गर्नेछु अर्थात् उनीहरूलाई भेट्नेछु ॥२७–२९॥ अथवा यी अत्यन्त दुष्ट स्वभाव भएका कौरवहरू सहित यी अत्यन्त दुराचारीहरूले निवास गरेको हस्तिनापुरलाई नै पृथ्वीबाट उखेलेर भागीरथी गङ्गाजीमा फ्याँकिदिन्छु, जसको प्रभावले गर्दा पृथ्वीमा कुनै कौरवको अस्तित्व पूर्ण रूपमा समाप्त हुनेछ ॥३०॥ **पराशरजीले भन्नुभयो**– यसो भन्नुभएर अत्यन्त क्रोधित हुनुभएकाले राता–राता आँखा भएका मुसल धारण गर्नुहुने अत्यन्त शक्तिशाली बलरामले बाहिरी पर्खालको फेदमा हलो लगाएर तान्नुभयो ॥३१॥ त्यस समयमा सम्पूर्ण हस्तिनापुर डगमगाउन अर्थात् हल्लिन थालेको देखेर सबै अत्यन्त डराएको अन्तरात्मा भएका कौरवहरू यथार्थ रूपमा भयभीत भए अर्थात् अत्यधिक मात्रामा डराए ॥३२॥ त्यसपछि उनीहरू भन्नथाले–हे राम! हे बलराम! हे महाबाहो! हामीहरूद्वारा भएको अपराधलाई क्षमा गरिदिनुहोस्, क्षमा गरिदिनुहोस्। हे मुसल धारण गर्नुहुने बलराम! हजुरले हामीहरूबाट प्रसन्न भएर आफ्नो क्रोधलाई शान्त गराइदिनुहोस् ॥३३॥ हे बलराम! हामी हजुरलाई यसै समयमा उनकी पत्नीसहित साम्ब सुम्पन तयार छौं अर्थात् सुम्पन्छौं। हामीहरूलाई हजुरको प्रभावका विषयमा ज्ञान थिएन। त्यसकारण हामीबाट हजुरको अपमान भयो, अब हामी यस्तो किसिमको अपराध गर्नेछैनौं, हामीहरूलाई क्षमा गरिदिनुहोस् ॥३४॥ **पराशरजीले भन्नुभयो**– हे

पराशर उवाच

ततो निर्यातयामासुः साम्बं पत्नीसमन्वितम् ।
निष्क्रम्य नगरात्तूर्णं कौरवा मुनिपुङ्गव ॥३५॥
भीष्म–द्रोण– कृपादीनां प्रणम्य वदतां प्रियम् ।
क्षान्तमेतन्मयेत्याह बलो बलवतां वरः ॥३६॥
अद्याप्याघूर्णिताकारं लक्ष्यते तत् पुरं द्विज ।
एष प्रभावो रामस्य बलशौर्योपलक्षणः ॥३७॥
ततस्तु कौरवाः साम्बं सम्पूज्य हलिना सह ।
प्रेषयामासुरुद्वाहधनभार्यासमन्वितम् ॥३८॥

मुनिश्रेष्ठ! त्यसपछि कौरवहरूले अत्यन्त शीघ्रतापूर्वक आफ्नो नगरभन्दा बाहिर आएर उनकी पत्नीसहित साम्बलाई बलराममा समर्पण गरिदिए अर्थात् अत्यन्त पराक्रमी बलरामलाई सुम्पिदिए ॥३५॥ त्यसपछि प्रणाम गर्दै अत्यन्त प्रिय वचन बोलिरहेका भीष्म, द्रोण, कृप आदिसँग अत्यन्त पराक्रमी बलरामले भन्नुभयो– “धन्यवाद! मैले तपाईंहरूलाई क्षमा गरिदिएँ ॥३६॥ हे ब्राह्मणश्रेष्ठ! यसै कारणले गर्दा त्यस समयदेखि आजसम्म हस्तिनापुर गङ्गाजीतिर केही मात्रामा झुकेको अर्थात् ढल्किएको जस्तो देखिन्छ। यो अत्यन्त पराक्रमी बलरामको बल र सामर्थ्यको परिचय दिने उहाँको प्रभाव मात्र हो ॥३७॥ त्यसपछि कौरवहरूले अत्यन्त पराक्रमी बलरामका साथ साम्बको पूजा गरेर अत्यन्त धेरै दाइजो र नववधू अर्थात् दुलहीका साथ उनलाई द्वारकापुरीतिर जानका लागि विदा गरिदिए ॥३८॥

इति श्रीविष्णुमहापुराणे पञ्चमांशे पञ्चत्रिंशोऽध्यायः ।



## षट्त्रिंशोऽध्यायः

## अध्याय – ३६

### “द्विविधवधः”

(द्विविधको वध अर्थात् हत्या)

पराशर उवाच

मैत्रेय! विदितं तस्य बलस्य बलशालिनः ।

कृतं यदन्यत्तेनाभूत्तदपि श्रूयतां द्विज ॥१॥

नरकास्यासुरेन्द्रस्य देवपक्षविरोधिनः ।

सखाभवन्महावीर्यो द्विविदो नाम वानरः ॥२॥

वैरानुबन्धं बलवान् स चकार सुरान् प्रति ।

नरकं हतवान् कृष्णो बलदर्पसमन्वितम् ॥३॥

करिष्ये सर्वदेवानां तस्मादेतत्प्रतिक्रियाम् ।

यज्ञविध्वंसनं कुर्वन् मर्त्यलोकक्षयं तथा ॥४॥

ततो विध्वंसयामास यज्ञानज्ञानमोहितः ।

विभेद साधुमर्यादां क्षयं चक्रे च देहिनाम् ॥५॥

ददाह च वनोद्देशान् पुरग्रामान्तरणि च ।

क्वचिच्च पर्वताक्षेपैर्ग्रामादीन् समचूर्णत् ॥६॥

शैलानुत्पाट्य तोयेषु मुमोचाम्बुनिधौ तथा ।

पुनश्चार्णवमध्यस्थः क्षोभयामास सागरम् ॥७॥

**पराशरजीले भन्नुभयो** – हे मैत्रेय! हे ब्राह्मणश्रेष्ठ! अत्यन्त शक्तिशाली शेषनागको अंशबाट अवतार लिनुभएका बलरामले अन्य पनि जे-जे पुरुषार्थयुक्त कार्य गर्नुभएको छ, तिनीहरूका विषयमा सुन ॥१॥ परापूर्वकालमा देवताहरूको शत्रु नरकासुरको अत्यन्त सुहृदयी मित्र अतिशय बलशाली एवम् पराक्रमी द्विविद नाम भएको एउटा बाँदर थियो ॥२॥ त्यो द्विविद नाम भएको बाँदरले देवताहरूसँग शत्रुतापूर्ण व्यवहार गर्न थाल्यो । यसको कारण थियो, पहिले परमात्मा श्रीकृष्णले देवताहरूको कल्याणका लागि नरकासुरको पूर्ण रूपमा विनाश गरिदिनुभएको थियो ॥३॥ त्यस समयमा त्यो द्विविद नाम भएको बाँदरले म एक्लैले नै सबै यज्ञहरूको क्रमभङ्ग अर्थात् तिनीहरूको क्रियामा व्यवधान उत्पन्न गराउने कार्य र मर्त्यलोकको पूर्ण रूपमा विनाश गरिदिएर सम्पूर्ण देवताहरूको प्रतिकार गर्न सक्षम छु अर्थात् सक्दछु भन्ने निश्चय गऱ्यो ॥४॥ यस प्रकारको निश्चय गरेर अज्ञानबाट मोहित अर्थात् यथार्थ रूपमा अविवेकी भएको त्यो बाँदरले यज्ञहरूको पूर्ण रूपमा विनाश, साधुहरूको मर्यादा र शरीर धारण गरेकाहरूलाई मार्न आरम्भ गऱ्यो अर्थात् जीवमात्रको पूर्ण रूपमा विनाश गर्न थाल्यो ॥५॥ उसले कुनै-कुनै समयमा गाउँ, नगर र जङ्गल आदिमा आगो लगाइदिन्थ्यो अर्थात् तिनीहरूलाई जलाएर भष्म गराइदिन्थ्यो भने कुनै समयमा पर्वत उठाएर गाउँमा फ्याँकिदिएर गाउँ नष्ट गराइदिन्थ्यो अर्थात् गाउँलाई नै धुलोपिठो पारिदिन्थ्यो ॥६॥ तथा कुनै समयमा पर्वतलाई पूर्ण रूपमा उखेलेर समुद्रमा फ्याँकिदिने गर्दथ्यो र कुनै समयमा स्वयं आफैँ समुद्रमा पसेर समुद्रको पानीलाई खल्बल्याइदिन्थ्यो अर्थात् समुद्रको पानीमा उत्तेजना उत्पन्न गराइदिन्थ्यो ॥७॥ हे

तेन विक्षोभितश्चाब्धिरुद्वेलो ऽजायत द्विज ।

प्लावयंस्तीरजान् ग्रामान् पुरादीनतिवेगवान् ॥८॥

कामरूपी महारूपं कृत्वा सस्यानशेषतः ।

लुण्ठन् भ्रमणसंमर्दैः सञ्चूर्णयति वानरः ॥९॥

तेन विप्रकृतं सर्वं जगदेतद्दुरात्मना ।

निःस्वाध्यायवषट्कारं मैत्रेयासीत् सुदुःखितम् ॥१०॥

एकदा रैवतोद्याने पपौ पानं हलायुधः ।

रेवती च महाभागा तथैवान्या वरस्त्रियः ॥११॥

उद्गीयमानो विलसल्ललनामौलिमध्यगः ।

रेमे यदुकुलश्रेष्ठः कुबेर इव मन्दरे ॥१२॥

ततः स वानरोऽभ्येत्य गृहीत्वा सीरिणो हलम् ।

मुसलञ्च चकारास्य सम्मुखञ्च विडम्बनम् ॥१३॥

तथैव योषितां तासां जहासाभिमुखं कपिः ।

पानपूर्णांश्च करकांश्चिक्षेपाहत्य वै तदा ॥१४॥

ततः कोपपरीतात्मा भर्त्सयामास तं बलः ।

तथापि तमवज्ञाय चक्रे किलकिलाध्वनिम् ॥१५॥

ततः समुत्थाय बलो जग्राह मुसलं रुषा ।

सोऽपि शैलशिलां भीमां जग्राह प्लवगोत्तमः ॥१६॥

ब्राह्मणश्रेष्ठ! समुद्रको पानीले अग्ला-अग्ला छालहरूका माध्यमद्वारा किनारालाई आफ्नो नियन्त्रणमा लिएर किनारका नजिकका गाउँहरूलाई पूर्ण रूपमा डुबाइदिन्थ्यो अर्थात् ती गाउँहरूलाई पानीको चपेटामा पारिदिन्थ्यो ॥८॥ आफ्नो चाहना अनुसारको स्वरूप धारण गर्न समर्थवान् अर्थात् सक्षम रहेको त्यो अत्यन्त भयानक बाँदर कुनै समयमा लडीबुडी गर्न थाल्दथ्यो अर्थात् लोटपोट गर्दथ्यो र आफ्नो लडीबुडीको दलाइले खेतहरूमा लगाइएको बालीनाली पूर्ण रूपमा नष्ट पारिदिन्थ्यो ॥९॥ हे ब्राह्मण! त्यो अत्यन्त दुष्ट आत्मा भएको बाँदरले सम्पूर्ण संसारलाई स्वाध्याय र वषट्कार अर्थात् देवताहरूको उद्देश्यले आहुति दिइने यज्ञबाट पूर्ण रूपमा शून्य बनाइदिएको थियो, त्यसकारण यो संसार अत्यन्त दुःखमय थियो ॥१०॥ एकदिन राजा रैवतको बगैंचामा क्रीडाबाट अत्यन्त थकित हुनुभएका अत्यन्त पराक्रमी बलराम सुरापान गरिरहनु भएको थियो । उहाँका साथमा अत्यन्त भाग्यमानी रेवती तथा अन्य अतिशय सुन्दर नारीहरू पनि थिए ॥११॥ त्यस समयमा अत्यन्त सुन्दर तरुनीहरूका बीचमा यदुश्रेष्ठ बलराम गीत गाउँदै यस प्रकार शोभायमान हुनुभएको थियो, जसरी मन्दराचल पर्वतमा कुबेर शोभायमान भएर बस्दछन् ॥१२॥ त्यसपछि त्यहाँ त्यो अत्यन्त भयानक द्विविद नाम भएको बाँदर आइपुग्यो र अत्यन्त पराक्रमी बलरामको हलो एवं मुसल लिएर उहाँका अगाडि उहाँकै विभिन्न किसिमको नकल गर्न लाग्यो ॥१३॥ त्यसपछि त्यो अत्यन्त दुष्ट अन्तरात्मा भएको बाँदर त्यहाँ भएका सबै स्त्रीहरूलाई अत्यन्त कामुक दृष्टिले हेर्दै हाँस्न लाग्यो र त्यहाँ मदिरा भरेर राखिएको कलश फुटाएर फ्याँकिदियो ॥१४॥ त्यसपछि अत्यन्त पराक्रमी बलरामले त्यसलाई गाली गर्नुभयो, तर त्यो दुष्यात्मा बाँदर उहाँको अपमान गर्दै अत्यन्त आनन्दले गरिने खलबलीको ध्वनि अर्थात् आवाज निकाल्न थाल्यो ॥१५॥ त्यसपछि अत्यन्त पराक्रमी बलरामले मुसुमुसु हाँस्दै आफ्नो मुसल उठाउनु भयो तथा त्यस बाँदरले पनि एउटा अत्यन्त भयानक पर्वतको ढुङ्गो उठायो ॥१६॥ तथा उसले त्यो ढुङ्गो

चिक्षेप स च तां क्षिप्तां मुसलेन सहस्रधा।

बिभेद यादवश्रेष्ठः सा पपात महीतले ॥१७॥

पतन्तंमुसलञ्चासौ समुल्लङ्घ्य प्लवङ्गमः।

वेगेनागत्य रोषेण तलेनोरस्यताडयत् ॥१८॥

ततो बलेन कोपेन मुष्टिना मूर्ध्नि ताडितः।

पपात रुधिरोद्गारी द्विविदः क्षीणजीवितः ॥१९॥

पतता तच्छरीरेण गिरेः श्रृङ्गमदीर्यत।

मैत्रेय! शतधा वज्रिवज्रेणेव विदारि तम् ॥२०॥

पुष्पवृष्टिं ततो देवा रामस्योपरि चिक्षिपुः।

प्रशशंसुस्तथाभ्येत्य साध्वेतत्ते महत् कृतम् ॥२१॥

अनेन दुष्टकपिना दैत्यपक्षोपकारिणा।

जगन्निराकृतं वीर! दिष्ट्यासौ क्षयमागतः ॥२२॥

इत्युक्त्वा दिवमाजग्मुर्देवा हृष्टाः सगुह्यकाः ॥२३॥

पराशर उवाच

एवंविधान्यनेकानि बलदेवस्य धीमतः।

कर्माण्यपरिमेयाणि शेषस्य धरणीभृतः ॥२४॥

बलरामलाई ताकेर फ्याँकिदियो, तर यादवश्रेष्ठ अत्यन्त पराक्रमी बलरामले आफ्नो मुसलले प्रहार गरेर त्यो ढुङ्गालाई हजारौं टुक्रा पारिदिनु भयो, जसले गर्दा त्यो पृथ्वीमा खस्यो ॥१७॥ त्यसपछि त्यो बाँदरले अत्यन्त पराक्रमी बलरामले गर्नुभएको मुसलको प्रहारबाट बच्दै क्रोधपूर्वक अतिशय तीव्र गतिमा गएर उहाँको छातीमा एक मुड्की हान्यो अर्थात् उहाँको छातीमा मुड्कीले प्रहार गऱ्यो ॥१८॥ त्यसपछि अत्यन्त पराक्रमी बलरामले अत्यन्त क्रोधित भएर द्विविदको शिरमा एक मुड्की हिर्काउनु भयो, जसको प्रभावले गर्दा त्यो रगत छाद्दै प्राणहीन भएर पृथ्वीमा ढल्यो ॥१९॥ हे मैत्रेय! त्यो पृथ्वीमा खस्दाका अवस्थामा त्यसको शरीरको भारका प्रभावले इन्द्रको वज्रबाट टुक्रा–टुक्रा भए जति नै त्यो पर्वतको शिखर अर्थात् चुचुरो सैकडौं टुक्राहरूमा परिणत भयो ॥२०॥ त्यस समयमा देवताहरूले अत्यन्त पराक्रमी बलराम रहनुभएको स्थानमा आकाशबाट पुष्पवृष्टि गरे अर्थात् फूल बर्षाए र त्यहाँ आएर "हजुरले यो अत्यन्त उत्तम कार्य गरिदिनुभयो" भन्दै उहाँको प्रशंसा पनि गरे ॥२१॥ हे वीर पुरुष! दैत्यहरूको पक्षपोषण गर्ने अर्थात् दैत्यहरूको कल्याण गर्ने कार्यमा अत्यन्त उत्साहित भएर लागेको यो अत्यन्त दुष्ट बाँदरले संसारलाई धेरै कष्ट दिइरहेको थियो। आज यो मऱ्यो, यो अत्यन्त सौभाग्यको कुरा हो। यसो भनेर देवताहरू यक्षहरूलाई साथमा लिएर अत्यन्त प्रसन्नतापूर्वक स्वर्गलोकमा गए ॥२२–२३॥ **पराशरजीले भन्नुभयो** – हे मैत्रेय! पृथ्वीलाई आफ्ना फणामा धारण गर्नुहुने शेषनारायणको अंशबाट अवतार लिनुभएका अत्यन्त पराक्रमी बलरामका यस प्रकारका प्रशंसनीय अनेकौं कर्म छन्, जुन अतिशय अतुलनीय रहेका छन् ॥२४॥

इति श्रीविष्णुमहापुराणे पञ्चमांशे षट्त्रिंशोऽध्यायः।

ॐ

## सप्तत्रिंशोऽध्यायः

## अध्याय – ३७

### "ऋषीणां शापः, यदुवंशविनाशः, भगवतः स्वधामप्रत्यावर्तनत्तच"

(ऋषिहरूको श्राप, यदुवंशको विनाश र परमात्माको स्वधान गमन)

पराशर उवाच

एवं दैत्यवधं कृष्णो बलदेवसहायवान्।

चक्रे दुष्टक्षितीशानां तथैव जगतः कृते ॥१॥

क्षितेश्च भारं भगवान् फाल्गुनेन समं विभुः।

अवतारयामास हरिः समस्ताक्षौहिणीवधात् ॥२॥

कृत्वा भारावतरणं भुवो हत्वाखिलान् रिपू।

शापव्याजेन विप्राणामुपसंहृतवान् कुलम् ॥३॥

उत्सृज्य द्वारकां कृष्णस्त्यक्त्वा मानुष्यमात्मभूः।

सांशो विष्णुमयं स्थानं प्रविवेश पुनर्निजम् ॥४॥

मैत्रेय उवाच

स विप्रशापव्याजेन सञ्जह्रे स्वकुलं कथम्।

कथं च मानुषं देहमुत्ससर्ज जनार्दनः ॥५॥

पराशर उवाच

विश्वामित्रस्तथा कण्वो नारदश्च महामुनिः।

पिण्डारके महीतीर्थे दृष्ट्या यदुकुमारकैः ॥६॥

**पराशरजीले भन्नुभयो** – हे मैत्रेय! यस प्रकार अत्यन्त पराक्रमी बलराम सहित भएर परमात्मा श्रीकृष्णले सम्पूर्ण जगत्को कल्याण गर्नका लागि अर्थात् बढिरहेको अधर्मको विनाश गरे धर्मको स्थापना गर्नका लागि दैत्य र दुराचारी राजाहरूको संहार गर्नुभयो। यिनीहरूको पीडाबाट पृथ्वीलाई यथार्थ रूपमा मुक्ति दिलाइदिनु भयो ॥१॥ तथा परमात्मा श्रीकृष्णले अतुलनीय शक्ति भएका अर्जुनलाई आफ्नो सहयोगी बनाउनुभएर अठार अक्षौहिणी सेनाको पूर्ण रूपमा विनाश गरिदिनु भएर पृथ्वीलाई पीडाबाट पूर्ण रूपमा मुक्त गराइदिनुभयो अर्थात् उनीमाथि रहेको भार (बोझ) हटाइदिनुभयो ॥२॥ यसरी नै सम्पूर्ण शत्रु राजाहरूको वध गरिदिनु भएर पृथ्वीलाई सबै किसिमका पीडाहरूबाट यथार्थ रूपमा संहार गरिदिनु भएपछि ब्राह्मणहरूको सरापको बहानामा आफ्नो कुलको पनि पूर्ण रूपमा संहार गरिदिनु भयो ॥३॥ हे मुनि! यी सबै कार्यहरू समाप्त गरिसक्नु भएपछि अन्तमा द्वारकापुरीलाई परित्याग गरेर तथा आफ्नो मनुष्यशरीरको त्याग गरेर परमात्मा श्रीकृष्णले आफ्नो अंशका रूपमा रहेका बलराम, प्रद्युम्न आदि सहित आफ्नो विष्णुमय परमधाममा प्रवेश गर्नुभयो ॥४॥ **मैत्रेयले भने**– परब्रह्म परमात्मा श्रीजनार्दनले ब्राह्मणको परापका वहानामा कसरी आफ्नो कुलको सर्वनाश अर्थात् पूर्ण रूपमा विनाश गर्नुभयो र आफ्नो मनुष्यशरीरको त्याग कसरी गर्नुभयो? हजुरले मेरा लागि यी सबै कुराहरू विस्तारपूर्वक बताइदिनुहोस् ॥५॥ **पराशरजीले भन्नुभयो**– एक समयमा यादवकुमारहरूले पिण्डार क नाम भएको अत्यन्त पवित्र तीर्थमा विश्वामित्र, कण्व र नारद जस्ता महामुनिहरूलाई देखे ॥६॥ त्यसपछि

ततस्ते यौवनोन्मत्ता भाविकार्यप्रचोदिता ।

साम्बं जाम्बवतीपुत्रं भूषयित्वा स्त्रियं यथा ॥७॥

प्रसृतांस्तान्मुनीनूचुः प्रणिपातपुरःसरम् ।

इयं स्त्री पुत्रकामस्य बभ्रोः किं जनयिष्यति ॥८॥

पराशर उवाच

दिव्यज्ञानोपपन्नास्ते विप्रलब्धाः कुमारकैः ।

मुनयः कुपिताः प्रोचुर्मुसलं जनयिष्यति ।

येनाखिलकुलोत्सादो यादवानां भविष्यति ॥९॥

इत्युक्तास्तैः कुमारास्ते आचचक्षुर्यथाकृतम् ।

उग्रसेनाय मुसलं जज्ञे शाम्बस्य चोदरात् ॥१०॥

तदुग्रसेनो मुसलमयङ्क्ष्चूर्णमकारयात् ।

जज्ञे तदेरकोचूर्णं प्रक्षिप्तैर्महोदधौ ॥११॥

मुसलस्याथ लौहस्य चूर्णितस्यान्धकैर्द्विज ।

खण्डं चूर्णयितुं शेकुर्नैकं ते तोमराकृति ॥१२॥

तदप्यम्बुनिधौ क्षिप्तं मत्स्यो जग्राह घातिभिः ।

घातितस्योदरात् तस्य लुब्धो जग्राह तं जरा ॥१३॥

विज्ञातपरमार्थोऽपि भगवान् मधुसूदनः ।

नैच्छत्तदन्यथाकर्तुं विधिना यत् समीहितम् ॥१४॥

देवैश्च प्रहितो दूतः प्रणिपत्याह केशवम् ।

रहस्येवमहं दूतः प्रहितो भगवन् सुरैः ॥१५॥

यौवनका कारणले अत्यन्त उन्मत्त भएका र भावीद्वारा यथार्थ रूपमा अभिप्रेरित भएका ती यादवकुमारहरूले जाम्बवतीका पुत्ररत्न साम्बलाई एउटी गर्भवती स्त्रीका जसरी नै सिँगार–पटार गराएर त्यहाँ रहनुभएका ऋषिहरूलाई प्रणाम गर्दै सोधे– हे महर्षिहरू यो स्त्रीले पुत्र उत्पन्न गराउने कामना गरेकी छ, त्यसकारण तपाईंहरूले सत्य बताइदिनुहोस्, यसले के उत्पन्न गराउँछे अर्थात् जन्माउँछे ॥७–८॥ **पराशरजीले भन्नुभयो–** यादवकुमारहरूको यस प्रकारको अत्यन्त घृणित व्यवहार देखेपछि दिव्यज्ञानबाट सम्पन्न भएका ती मुनिहरूले आफ्नो अपमान भएको सम्झँदै अत्यन्त क्रोधित भएर भने– "यसले सम्पूर्ण यावदवंशको सर्वनाशको कारणस्वरूप एउटा अलौकिक मुसल जन्माउँछे, जसबाट संसारमा भएका सम्पूर्ण यादवहरूको कुल पूर्ण रूपमा समाप्त हुनेछ ॥९॥ मुनिहरूले यसरी भनिसकेपछि ती यादवकुमारहरूले त्यो सबै कुराकानी जस्ताको त्यस्तै राजा उग्रसेनलाई बताइदिए । त्यसपछि जाम्बवतीका पुत्ररत्न साम्बका पेटबाट एउटा अलौकिक मुसल उत्पन्न भयो ॥१०॥ हे ब्राह्मणश्रेष्ठ! महाराजा उग्रसनले त्यो अत्यन्त अलौकिक फलामको मुसललाई प्रायः पूर्ण रूपमा धुलोपिठो गराइदिए, तर भालाको आकार भएको एक भागलाई जस्तोसुकै उपायको प्रयोग गर्दा पनि धुलो–पिठो बनाउन सकेनन् र त्यसलाई लगेर समुद्रमा फ्याँकिदिए । त्यसबाट त्यहाँ अत्यन्त धेरै सरकण्डहरू उत्पन्न भए ॥११–१२॥ त्यो समुद्रमा फ्याँकिएको मुसलको भाला आकारको भागलाई एउटा माछाले निल्यो । त्यस माछालाई एउटा माझीले आफ्नो जालमा पाऱ्यो तथा त्यो माछालाई चिर्दा त्यसको पेटबाट निस्किएको त्यो मुसलको भाला बराबरको भागलाई जरा नाम भएको एउटा व्याधाले लिएर गयो ॥१३॥ परमात्मा श्रीमधुसूदनलाई यी सबै कुराहरूको यथार्थ रूपमा ज्ञान भएपनि उहाँले विधाताको इच्छामा कुनै किसिमको व्यवधान उत्पन्न गराउने कामना राख्नुभएन ॥१४॥ त्यसपछि एकदिन देवताहरूद्वारा पठाइएको एउटा दूतले परमात्मा श्रीकृष्णका सामीप्यमा आएर उहाँलाई प्रणाम गर्दै भन्यो– हे भगवान् हजुरसँग एकान्तमा केही कुराहरू बताउनका लागि देवताहरूले मलाई हजुरको सामीप्यमा पठाएका छन् ॥१५॥ हे प्रभु! विश्वदेव, अश्विनीकुमार,

विश्वाश्वि– मरुदादित्य–रुद्र– साध्यादिभिः सह।

विज्ञापयति यच्छक्रस्तदिदं श्रूयतां प्रभो ॥१६॥

भारावतारणार्थाय वर्षाणामधिकं शतम्।

भगवानवतीर्णोऽत्र त्रिदशैः सम्प्रसादितः ॥१७॥

दुर्वृत्ता निहता दैत्या भुवो भारोऽवतारितः।

त्वया सनाथास्त्रिदशा भवन्तु त्रिदिवे पुनः ॥१८॥

तदतीतं जगन्नाथ वर्षाणामधिकं शतम्।

इदानीं गम्यतां स्वर्गो भवता यदि रोचते ॥१९॥

देवैर्विज्ञाप्यते चेदमथात्रैव रतिस्तव।

तत् स्थीयतां यथाकालमाख्येयमनुजीविभिः ॥२०॥

श्रीभगवानुवाच

यत्त्वमात्थाखिलं दूत वेद्म्येतदहमप्युत।

प्रारब्ध एव हि मया यादवानामपि क्षयः ॥२१।

भुवो नाद्यापि भारोऽयं यादवैरनिवर्हितैः।

अवतार्य करोम्येतत् सप्तरात्रेण सत्वरः ॥२२॥

यथागृहीतामम्भोधेर्दत्त्वाहं द्वारकाभुवम्।

यादवानुपसंहृत्य यास्यामि त्रिदिवालयम् ॥२३॥

वायु, आदित्य, रुद्र, मरुद्गण र सम्पूर्ण देवताहरू सहित स्वर्गका अधिपति इन्द्रले हजुरका समीपमा जुन सन्देश पठाएका छन्, त्यस विषयमा हजुरले सुनिदिनुहोस् ॥१६॥ हे भगवान्! देवताहरूद्वारा अभिप्रेरित भएर उनीहरूसँगै पृथ्वीलाई पापबाट पूर्ण रूपमा मुक्त गराउनका लागि हजुरले अवतार लिनुभएको सय वर्षहरू भन्दा धेरै समय बितिसकेको छ ॥१७॥ हे प्रभु! अब हजुरले संसारमा भएका सबै दुराचारी दैत्यहरूको वध गरि सक्नुभएको छ र पृथ्वीलाई पनि पीडाबाट पूर्ण रूपमा मुक्त गराइदिइसक्नु भएको छ। त्यसकारण अब हामीहरू हजुरसँग स्वर्गमा आएर निवासा गरिदिएर सम्पूर्ण देवताहरूको अभिभावक बनिदिनु हुन अत्यन्त श्रद्धा र भक्तिपूवर्क प्रार्थना गर्दछौँ ॥१८॥ हे जगन्नाथ! हजुर पृथ्वीमा आउनुभएको सय वर्षभन्दा धेरै समय भइसक्यो। अब यदि हजुरलाई उचित लाग्दछ भने अर्थात् हजुरले निवास गर्नका लागि स्वर्ग उपयुक्त छ भने स्वर्गलोकमा आउनुहोस् ॥१९॥ देवताहरूको सन्देश अनुसार यदि हजुरलाई पृथ्वीमा नै निवास गर्ने चाहना रहेको छ भने यहीँ निवास गरिरहनुहोस्। प्रभुका सामीप्यमा कर्तव्यका विषयमा नम्रतापूर्वक निवेदन गर्ने कार्य सेवकहरूको आफ्नो दायित्व निर्वाह मात्र गरेका हौँ ॥२०॥ **श्रीभगवान्ले भन्नुभयो** – हे दूत! तिमीले जे बताइरहेका छौ, त्यसका विषयमा मलाई जानकारी छ अर्थात् ज्ञान छ। त्यसकारण मैले आफ्नो यादववंशको पूर्ण रूपम विनाश गरेर पृथ्वीलाई यादवबाट शून्य बनाउने कार्यको थालनी गर्दै यादववंशको विनाश गर्न आरम्भ गरिसकेको छु ॥२१॥ यो यादववंशको पूर्ण रूपमा विनाश नभएसम्म यथार्थमा पृथ्वी आफूमाथि परिरहेका पीडाबाट मुक्त हुन सक्दिनन्। त्यसकारण अब म अत्यन्त शीघ्रतापूर्वक अर्थात् सात रातभित्रै सम्पूर्ण यादववंशको सर्वनाश अर्थात् विनाश गरेर स्वर्गलोकतिर प्रस्थान गर्नेछु अर्थात् यहाँबाट जानेछु ॥२२॥ जसरी मैले यो अत्यन्त सुन्दर द्वारका नगरी रहेको भूमि समुद्रसँग मागेको थिएँ, त्यसरी नै समुद्रलाई फिर्ता गरिदिएर तथा पृथ्वीमा भएका सबै यादवहरूको उपसंहार गरेर अर्थात् विनाश गरेर म स्वर्गलोकमा आउनेछु ॥२३॥ अब देवराज इन्द्र र

मनुष्यदेहमुत्सृज्य सङ्कर्षणसहायवान्।

प्राप्त एवास्मि मन्तव्यो देवेन्द्रण तथा सुरैः ॥२४॥

जरासन्धादयो येऽन्ये निहता भारहेतवः।

क्षितेस्तेभ्यः कुमारोऽपि यदूनां नापचीयते ॥२५॥

तदेनं सुमहाभारमवतार्य क्षितेरहम्।

यास्याम्यमरलोकस्य पालनाय ब्रवीहि तान् ॥२६॥

पराशर उवाच

इत्युक्तो वासुदेवेन देवदूतः प्रणम्य तम्।

मैत्रेय दिव्यया गत्या देवराजन्तिकं ययौ ॥२७॥

भगवानप्यथोत्पातान् दिव्यभौमान्तरिक्षगान्।

ददर्श द्वारकापुर्य्यां विनाशाय दिवानिशम् ॥२८॥

तान् दृष्ट्वा यादवानाह पश्यध्वमतिदारुणान्।

महोत्पातान् शमायै प्रभासं याम मा चिरम् ॥२९॥

पराशर उवाच

एवमुक्ते तु कृष्णेन यादवप्रवरस्ततः।

महाभागवतः प्राह प्रणिपत्योद्धवो हरिम् ॥३०॥

भगवन् यन्मया कार्यं तदाज्ञापय साम्प्रतम्।

मन्ये कुलमिदं सर्वं भगवान् संहरिष्यति।

नाशायास्य निमित्तानि कुलस्याच्युत लक्षये ॥३१॥

देवताहरूले यो बुझ्न आवश्यक छ, त्यो के हो भने अत्यन्त पराक्रमी बलराम (सङ्कर्षण) लाई आफ्नै साथमा लिएर यो मनुष्यशरीरको परित्याग गरिदिएर स्वर्गलोकमा पुग्नै लागिसकेको छु ॥२४॥ पृथ्वीको भारका अर्थात् बोझका रूपमा जरासन्ध लगायतका जुन जुन अत्यन्त पराक्रमी वीरहरू मारिएका छन्, तिनीहरूका तुलनामा यी यादवकुमारहरू पनि कुनै किसिमले कम रहेका छैनन् अर्थात् यी यादव कुमारहरू पनि जरासन्धहरूकै बराबरका हुन् ॥२५॥ त्यसकारण म पृथ्वीको भार अर्थात् बोझ–हरणस्वरूप यो अत्यन्त ठूलो कार्य सम्पन्न गरिसकेपछि अर्थात् पृथ्वीलाई यथार्थ रूपमा पीडाविहिन बनाइसकेपछि मात्र देवलोकको पालन–पोषण गर्नका लागि म स्वर्गलोकमा आउनेछु। तिमीले देवताहरूलाई मेरो यो सन्देश सुनाइदेऊ ॥२६॥ **पराशरजीले भन्नुभयो**– हे मैत्रेय! परमात्मा श्रीकृष्णले यस किसिमको आज्ञा दिनुभएपछि त्यो देवताहरूले पठाएको दूत उहाँलाई प्रणाम गरेर अत्यन्त दिव्यगतिका माध्यमद्वारा गएर देवराज इन्द्रको सामीप्यमा उपस्थित भयो अर्थात् देवराज इन्द्रका नजिकमा पुग्यो ॥२७॥ यहाँ परमात्मा श्रीकृष्णले आफ्नो अत्यन्त सुन्दर द्वारकापुरीमा दिनरात विनाशको सूचकस्वरूप अलौकिक, भूइँबाट उत्पन्न एवं अन्तरिक्षसँग सम्बन्धित अनेकौं किसिमका उत्पातहरू आरम्भ भइसकेको देख्नुभयो ॥२८॥ यसप्रकारका उत्पातहरू भइरहेको देखेपछि परमात्मा श्रीकृष्णले यादवहरूसँग भन्नुभयो– हेर, यहाँ कस्तो अत्यन्त भयानक उत्पात मच्चिरहेको छ, यी सबैलाई शान्त गराउनका लागि हामीहरूले अत्यन्त शीघ्रतापूर्वक प्रभासक्षेत्र अर्थात् द्वारकाबाट धेरै पर सौरराष्ट्रमा रहेको तीर्थमा जानुपर्दछ ॥२९॥ **पराशरजीले भन्नुभयो**– परमात्मा श्रीकृष्णले यसो भन्नुभएपछि महाभागवत अर्थात् परम वैष्णव यादवश्रेष्ठ उद्धवले परमात्मा श्रीहरिलाई प्रणाम गर्दै उहाँसँग भने...॥३०॥ हे भगवान्! मलाई ज्ञान भए अनुसार अब हजुर आफ्नो कुलको विनाश अर्थात् सर्वनाश गर्न लागिरहनु भएको छ। किनकि हे अच्युत! यस समयमा सबैतिर विनाशका सूचक अनेकौं उत्पातहरू मात्र देखिइरहेका छन्। त्यसकारण हजुरले मलाई आज्ञा दिनुहोस् अब म के गरुँ? ॥३१॥